- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–४,
  फोन: ०६४-४२९३१८
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेंसीशहर-९, शेराबजार
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## रक्तकाली विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**

**फोन नं: २०७१२००, २१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

*सर्वप्रथम त नेपालीहरुको महान् पर्व विजयादशमीको उपलक्ष्यमा सम्पूर्ण महानुभावहरुमा सुख, शान्ति, समृद्धि प्राप्त हुँदै आध्यात्मिक रुपमा पनि उन्नति प्रगति हुँदै जाओस् भनी परमपूज्य सद्गुरुदेवहरुसमक्ष एवं माता दुर्गा भवानीसँग प्रार्थना गर्दै सम्पूर्णमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं।*

*चाडपर्वको आगमनको साथमा नेपाल अहिले गणतान्त्रिक देशको रुपमा अगाडि बढिराखेको छ। जनताले सरकारबाट ठूलो आसा राखेका छन्। देशमा शान्तिको चाहना राखेका छन्। दुःख, कष्ट, झंझटबाट मुक्ति चाहिराखेका छन्। दैनिक जीवनयापन सहज होस् भन्ने आसा राखेका छन्। त्यसैले यो सरकारले जनतालाई शान्ति, आनन्द दिन सकोस्, आध्यात्मिक भावभूमिको निर्माण गर्न सकोस्, यही प्रार्थना गर्दछौं।*

*जबसम्म व्यक्ति परिवार र समाजबाट माथि उठ्न सक्दैन तबसम्म न त जीवनलाई सफल बनाउन सक्तछ, न त कुनै कार्यलाई अगाडि बढाउन नै। चाहे राजनैतिक क्षेत्र होस् वा सरकार सञ्चालन गर्ने व्यक्तिहरुनै किन नहून्, नेतृत्व तहको प्रत्येक व्यक्तिमा त्याग हुनुपर्दछ। उनीहरु परिवार, समाजभन्दा माथि उठ्न सक्नुपर्दछ, तब मात्र व्यक्तिले केही गर्न सक्तछ। चाहे आध्यात्मिक क्षेत्रका व्यक्तिहरु हुन् वा भौतिक क्षेत्रका जो कोही नै किन नहुन्, प्रत्येकले नै आफूलाई माथि उठाउने प्रयत्न गर्नुपर्दछ। आसा गरौं देशमा नेतृत्व लिने व्यक्तिहरुले पनि यस कुरालाई आत्मसात् गर्नुहुनेछ। यो महिना शक्तिको महापर्वको रुपमा हाम्रो सामु आइराखेको छ। शक्ति प्राप्त गर्न चाहनेहरुको लागि यो एउटा दिव्य महापर्व हो। आध्यात्मिक रुपमा कृपा, आशीर्वाद प्राप्त गरी अगाडि बढ्नुपर्ने यस पर्वलाई धेरैले मोजमस्ती एवं अनावश्यक आडम्बर प्रदर्शन गर्ने माध्यम बनाएको पाइन्छ। माताहरुको पूजा, आराधना, साधना, ध्यान आदि गरी अगाडि बढ्दै आफ्नो धर्म, संस्कृति, रीतिरिवाजलाई निरन्तरता दिनुपर्नेमा गलत अर्थ लगाई आफ्नो स्वार्थपूर्तिको तर्क दिने गरेको पाइन्छ। चाहे जे होस् अरुले जे गर्छन् उनीहरुको कुरा हो, तपाईंले भने यस शक्तिको महापर्वलाई माताको भक्तिभावमा लागी मनाउनु हुनेछ भन्ने आसा लिएका छौं।*

*यसपाली हामीले यस अङ्कलाई 'रक्तकाली विशेष'को रुपमा निकाल्ने कोशिश गरेका छौं। महाशक्ति माता कालीका असंख्य रुपहरु छन्। तैपनि बुझाउनलाई सजिलो होस् भनी कतै सहस्रनामको उल्लेख पाइन्छ, कतै एकसय आठ नामहरुको उल्लेख पाइन्छ। कतै अष्टस्वरुपको वर्णन पनि गरिएको पाइन्छ। माता भगवती कालीको कार्य अनुसारको नाम हुने गर्दछ। रातो वर्णमा देखिँदा रक्तकाली भनिएको हुनसक्छ। रक्तबीजलाई संहार गरेको कारण रक्तकाली भनिएको हुनसक्छ। तामसिक कार्यमा लाग्नेहरुलाई संहार गर्ने एवं रजोगुण युक्त भई कार्य गर्ने भएकाले रक्तकाली भनिएको हुनसक्दछ। यी यावत् प्रसंगहरुको समष्टिगत स्वरुप हुनुहुन्छ माता रक्तकाली। कालीका विभिन्न स्वरुपहरुमध्ये माता रक्तकालीको रुपमा आफ्नै विशिष्ट महत्त्व रहेको पाइन्छ। माताको बारेमा अझै धेरै सोधखोज, अनुसन्धानको खाँचो रहेको हामीले पनि महसुस गर्‍यौं। हामीले यस अङ्कमा सोचेजति मातासम्बन्धी लेखहरु समावेश गर्न सकेनौं। जे जति समेटियो त्यसलाई केवल अंश मात्र ठान्नुहोला। आउँदा दिनमा अझै खोज अनुसन्धान गर्दै अगाडि बढ्ने कोशिश गर्नेछौं।*

*अन्तमा यस अङ्कमा भए गरेका कमी कमजोरी, न्यूनताहरुको लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष पनि क्षमा याचना गर्दछौं र यहाँहरुको सल्लाह सुझावको अपेक्षा राख्दछौं।*

*अस्तु!*

# भगवती कालीको उत्पत्ति

कालीको तात्पर्य हो– "काल"की पत्नी। भगवान् शिवलाई काल भनिन्छ र यसप्रकार भगवान् शिवकी पत्नी 'जगदम्बा' नै काली हुनुहुन्छ । अत: उत्पत्तिको आधारमा भन्ने हो भने काली अजन्मा तथा आदि दैवीशक्ति हुनुहुन्छ । भगवती कालीको कृपाबाट नै ब्रह्मा, विष्णु शिव आदि देवता, ऋषि, मुनि तथा दैत्यादि सिद्धिहरू प्राप्त गर्नमा समर्थ हुन्छन् । यिनीहरू सबै कालीमा नै उत्पन्न भएर कालीमा नै लीन हुन जान्छन् ।

मार्कण्डेय पुराणमा वर्णन भए अनुसार एकपटक दुईजना महाबलशाली दैत्य शुम्भ एवं निशुम्भले युद्धमा देवराज इन्द्रलाई परास्त गरेर उनको राज्य एवं उनका सबै अधिकार छिने। तत्पश्चात् ती दुवै दैत्यले एकएक गरेर सबै देवताहरूलाई परास्त गरेर, उनीहरूलाई स्थानच्युत गरिदिए । निश्कासित देवहरूले आफ्नो प्राणरक्षा र सम्मान रक्षाका लागि अपराजिता देवीलाई आवाहन गर्न लागे किनकि यसपूर्व देवताहरूको आवाहनमा नै देवीले महिषासुरको वध गरेर उनीहरूलाई यो वरदान दिनुभएको थियो– "आपत्तिकालमा जहिलेसुकै मेरो स्मरण गर्नू, म तिमीहरूका समस्त महान् संकट क्षणभरमा नष्ट गरिदिन्छु ।"

यस कुरालाई स्मरण गरेर सबै देवता पर्वतराज हिमालयमा पुगेर विष्णुमाया भगवतीको स्तुति गर्न लागे । समस्त देवता जब विपत्ति नाशका लागि भगवतीको स्तुति गरिरहेका थिए, त्यसैबेला पार्वती गंगा स्नानका लागि आउँदा देवताहरूलाई देखेर उहाँहरूसँग सोध्नुभयो– "तपाईंहरूले कसको प्रार्थना गरिरहनु भएको ?"

त्यसबेला पार्वतीको शरीर कोशबाट प्रकट भएर शिवाले भन्नुभयो– "यी देवताहरूले शुम्भ दैत्यबाट मुक्तिका लागि मेरो प्रार्थना गरिरहनु भएको हो ।"

देवीको कोशबाट शिवा (अम्बिका) को प्राकट्यपछि उहाँलाई "कौशिकी" नामबाट पनि जानियो । कौशिकी प्रकट हुनुभएको हुनाले पार्वतीको रूप कालो हुन गयो र उहाँ "कालिका"को नामबाट विख्यात हुनुभयो ।

हिमालयमा परमसुन्दर रूप धारण गरेर विचरण गर्दैरहनु भएकी अम्बिकालाई शुम्भ-निशुम्भका चर चण्ड-मुण्डले देखे र गएर शुम्भसँग उहाँको रूपको प्रशंसा गरेर उहाँलाई आफ्नी पाणिग्रहिता बनाउनका लागि प्रार्थना गरे ।

चण्ड-मुण्डको वचन सुनेर शुम्भले महाअसुरलाई आफ्ना दूत बनाएर देवी सामु पठाए र आफूकहाँ आउन निमन्त्रणा दिए । महाअसुरले शुम्भको आज्ञानुसार दैत्यराजको प्रशंसा गऱ्यो र विवाह गर्ने परामर्श दियो । दूतको कुरा सुनेर देवीले भन्नुभयो– "तिमीले भने अनुसार नै शुम्भ र निशुम्भ पराक्रमी होलान्, तर तिनको प्रस्तावलाई म स्वीकार गर्न सक्तिन किनकि मैले यो प्रतिज्ञा गरेकी छु कि जसले युद्धमा मलाई परास्त गर्ला, मेरो अभिमानलाई तोड्ला, उही मेरो भर्ता बन्न सक्दछ ।" देवीको यस्तो वचन सुनेर क्रोधले परिपूर्ण महाअसुर दैत्यराज कहाँ फर्केर गयो र सारा वृत्तान्त सुनायो । दूतको कुरा सुनेर दैत्यराज अत्यन्त क्रोधोन्मत्त भयो र धूम्रलोचनलाई साठी हजार असुर सैन्यका साथ पठायो । धूम्रलोचलन तथा उसको सेनालाई देवी तथा उहाँका सिंहले समाप्त गरिदिनु भयो । देवीद्वारा धूम्रलोचन तथा उसका सम्पूर्ण सेनाको विनाश भएको सुनेर उसले चण्ड-मुण्डलाई विशाल सेना दिएर यसो भनी पठायो– "देवी र सिंहलाई मारेर, अम्बिकालाई बाँधेर मेरो सामु ल्याओ ।"

आज्ञा पाउनासाथ चण्ड-मुण्ड आदि दैत्य विविध आयुधले सुसज्जित भएर चतुरंगिणी सेनाका साथ देवीलाई समात्ने चेष्टामा रहे । अम्बिका अत्यधिक क्रोधमा आउनुभयो । क्रोधको कारण उहाँको मुख कालो हुन गयो, देवीको निधार खुम्चिएर तन्कियो..., तब भयानक मुख भएकी काली देवी तरवार तथा पाश लिएर प्रकट हुनुभयो । उहाँ बडो वेगले दैत्य सेनामाथि जाई लाग्नुभयो र उनीहरूलाई मारेर उनीहरूको भक्षण गर्न लाग्नुभयो । यसप्रकार कालीले दुरात्मा असुरहरूको सेनाको विनाश गरेर घोर गर्जना गर्दै कुपिता कालीले चण्ड र मुण्डलाई पनि मार्नुभयो । चण्ड-मुण्डलाई मार्नुभएको हुनाले कालीको ख्याति 'चामुण्डा'को रूपमा पनि हुन गयो ।

चण्ड-मुण्ड मारिएको सूचना पाएर असुरराज शुम्भ अत्यधिक क्रोधित भएर उदायुध, कम्बु, कालिक, मौर्य, दौर्हृद, कालकेय आदि असुरहरू तथा आफ्ना सम्पूर्ण सेनाका साथ प्रस्थान गऱ्यो र देवी, सिंह तथा कालीलाई चारैतिरबाट घेरेर उहाँहरूमाथि घातक प्रहार गर्न लाग्यो ।

अत्यन्त क्रोधित भएर कालीले आफ्नो मुख अत्यन्तै फैलाएर घोर गर्जना गर्नुभयो । त्यसबेला दैत्यहरूको नाशका लागि तथा देवताहरूको विकासका लागि ब्रह्मा, विष्णु, शिव, कार्तिकेय आदि देवताहरूको शक्ति अत्यन्तै पराक्रम एवं दिव्यायुधहरूबाट सम्पन्न भएर चण्डिका सम्मुख आए, तब अत्यन्त दिव्य शक्तिहरूबाट समन्वित कालीले दैत्य सेनाको संहार गर्न लाग्नुभयो । यस प्रकारको महाविनाशलाई देखेर असुरहरू भाग्न लागे, उनीहरूलाई भागिरहेको देखेर सेनापति रक्तबीज अत्यन्त क्रोधित भएर युद्ध गर्न आयो । रक्तबीजको शरीरबाट रुधिरको एक थोपा पनि भुइँमा खसेमा उसकै समान बलवान् अर्को असुर उत्पन्न हुन जान्थ्यो । देवीको ऐन्द्री शक्तिले त्यसमाथि वज्रले ताडना दिनुभयो, वज्र लाग्नाले उसको शरीरबाट अत्यन्तै धेरै रुधिर बग्न लाग्यो र अनेकौं रक्तबीजका समान् पराक्रमी योद्धाहरू प्रकट हुन लागे ।

दैत्यको रुधिरबाट उत्पन्न ती असुरहरूबाट सारा जगत व्याप्त हुन गयो र देवता अत्यन्त भयग्रस्त हुन गयो । देवताहरूलाई भयभीत भएको देखेर देवीले कालीसँग भन्नुभयो– "हे चामुण्डे ! तिमी आफ्नो मुख विस्तारपूर्वक फैलाऊ र मेरो शस्त्रपातबाट झरेका रुधिर बिन्दुहरूलाई तथा बिन्दुहरूबाट उत्पन्न महादैत्यहरूलाई आफ्नो बेगवान मुखद्वारा खाँदै जाऊ । युद्धभूमिमा रुधिरोत्पन्न यी महान् दैत्यहरूको भक्षण गर्दै तिमी घुम्दै रहू, तब यी दैत्यहरूको नाश हुन्छ किनकि तिमीले खाएमा नयाँ दैत्यहरू उत्पन्न हुँदैनन् ।"

तत्पश्चात् देवीले त्रिशूलद्वारा रक्तबीजमाथि प्रहार गर्नुभयो र कालीले तत्परतापूर्वक रक्तबीजको रुधिरलाई मुखमा ग्रहण गर्नुभयो । यसप्रकार देवीले शूल, वज्र, बाण, तरवार आदि आयुधहरूबाट रुधिरहीन महाअसुर रक्तबीजलाई मार्नुभयो । अस्तु, रक्तबीजको संहारबाट समस्त देव अत्यन्त प्रसन्न भए ।

## भगवती काली विभिन्न स्वरूपमा

मार्कण्डेय पुराणको दुर्गा सप्तशती खण्डको आठौँ अध्यायअनुसार भगवती कालीको उत्पत्ति जगतजननी जगदम्बिकाको निधारबाट भएको वर्णन पाइन्छ । तर भगवती कालीका असङ्ख्य रूपभेद छन् । वस्तुत: सबै दैवीशक्ति, योगिनीहरू आदि भगवतीका प्रतिरूप स्वरूपा हुन् । तर पनि प्रमुखरूपमा भगवती कालीका आठ स्वरूप मानिन्छन्– १. चिन्तामणि काली २. स्पर्शमणि काली ३. सन्ततिप्रदा काली ४. सिद्धि काली ५. दक्षिण काली ६. कामकला काली ७. हंस काली एवं ८. गुह्य काली ।

यसका अतिरिक्त 'भद्रकाली', 'श्मशान काली' तथा 'महाकाली' यी तीन भेदको प्रमुख रूपमा साधकहरूद्वारा आराधना गरिन्छ । भगवती कालीका अनेक भेदमध्ये दस महाविद्याअन्तर्गत प्रथम महाविद्या

# काली माहात्म्य

भगवती कालीको साधना गर्ने साधकलाई निम्नलिखित लाभ स्वत: प्राप्त हुन लाग्दछ–

–काली उपासनाबाट साधकको जीवनका समस्त विघ्न ठीक त्यसै प्रकारले समाप्त हुन्छन्, जसरी अग्निको सम्पर्कमा आएर पात-पतिङ्गर भस्म हुन्छन् ।

–काली स्तोत्रहरूको नियमित पाठ गर्ने साधकको वाणीमा अजस्र प्रवाह व्याप्त हुने भएकोले उसलाई गद्य-पद्य सबैमा पूर्ण अधिकार प्राप्त हुन जान्छ ।

–काली साधना सम्पन्न व्यक्तिभित्र अत्यधिक तेजस्विता स्वत: व्याप्त हुन जान्छ जसको कारण प्रतिवादी निष्प्रभ हुन जान्छ ।

–दस महाविद्याहरूमा प्रथम स्थान महाकालीको छ, अत: उहाँको साधना सम्पन्न गर्ने साधकलाई सुगमतापूर्वक सबै सिद्धिहरू हस्तगत हुन जान्छन् ।

–भगवती काली आफ्ना साधकहरूप्रति सदैव परमस्नेह राख्ने तथा उनीहरूको कल्याण गर्ने हुनुहुन्छ ।

–भगवती कालीको मंत्रको अनुष्ठान यदि साधक पूर्ण श्रद्धा तथा भक्तियुक्त भएर गर्दछ भने उसलाई चतुवर्गको प्राप्ति हुन्छ तथा भगवतीको सायुज्य पनि प्राप्त हुन्छ ।

–भगवती आफ्ना साधकको समस्त इच्छाहरूलाई पूर्ण गरेर उसलाई श्री, सम्पन्नता तथा श्रेष्ठता प्रदान गर्दछ तथा साधकको घरमा कुबेरवत् अक्षय भण्डार बनिरहन्छ ।

–कालीको साधना गर्ने साधक समस्त रोगहरूबाट मुक्त भएर पूर्ण स्वस्थ जीवन व्यतीत गर्दछ तथा पूर्ण युवा एवं दीर्घायु हुन्छ ।

–काली महाविद्या त्रिभुवनमा अत्यन्त दुर्लभ चारै पुरुषार्थलाई दिने, महापापहरूलाई नष्ट गर्ने सनातनी तथा समस्त भोगहरूलाई प्रदान गर्ने हुनुहुन्छ ।

भगवतीलाई मानिन्छ जो परब्रह्म शिवका परमशक्ति, साक्षात् ब्रह्मस्वरूपा, अनादि एवं अनन्ता हुनुहुन्छ । 'सप्तशती'मा भगवती आद्या कालीको अवतारको नै वर्णन छ । कालीका अनेक रूपभेदहरूमा 'दक्षिण कालिका' स्वरूप सद्य: फलप्रद मानिन्छ । यस रूपलाई 'दक्षिण कालिका'को नामले पनि सम्बोधन गरिन्छ ।

दक्षिण कालिकालाई नै प्रकारान्तरले चार स्वरूपमा निर्धारित गरिएको छ । यी स्वरूप हुन्– गुह्य काली, भद्र काली, श्मशान काली, अनादि रूपा, आद्या विद्या, ब्रह्म स्वरूपिणी तथा कैवल्य दात्री पनि भनिन्छ । शास्त्रहरूका अनुसार भगवती काली आद्या शक्ति, चित्त शक्तिको रूपमा विद्यमान हुनाको कारण अनादि, अनन्त, अनित्य वा सबैका स्वामिनी हुनुहुन्छ । वेदमा कालीको स्तुति 'भद्र काली'को नामबाट  गरिएको छ ।

विभिन्न शास्त्रहरूमा कालीको साधना-उपासना विभिन्न नामहरूबाट गरिएको पाइन्छ । नामभेद भए पनि यी सबै नाम एवं स्वरूप एक मात्र दक्षिणा कालीका नै हुन् जो निराकार हुँदाहुँदै पनि आफ्ना साधकहरूको भावनाअनुसार साकार रूपमा उपस्थित भएर उनीहरूलाई मुक्ति प्रदान गरेर र उनीहरूलाई अभिलषित लक्ष्यलाई प्राप्त गर्नमा समर्थ बनाउँछन्, अत: निराकार भएर पनि उहाँ साकार हुनुहुन्छ, अदृश्य भएर पनि दृश्यमान हुनुहुन्छ ।

भगवतीको नाम दक्षिणकाली किन रहन गयो तथा 'दक्षिण काली' शब्दको भावार्थ के हो ? यस सम्बन्धमा शास्त्रहरूमा प्राय: विभिन्न मत, दृष्टिकोण पाइन्छन्–

'निर्वाण तंत्र'का अनुसार–

**दक्षिणस्यां दिशि स्थाने संस्थितशवत खेः सुतः ।**

**काली नाम्ना पलायेत भीति युक्तः समन्ततः ॥**

**अः सा दक्षिणा काली त्रिषु लोकेषु गीयते ॥**

अर्थात्, "काली साधकद्वारा उच्चरित 'काली' शब्दको श्रवण मात्र गर्नाले सूर्यपुत्र "यम" भयभीत भएर पलायन हुन्छन् । यमले कालीका साधकलाई नरकगामी बनाउन सक्नुहुन्न । यसैकारण भगवतीलाई "दक्षिण काली" भनिन्छ ।

अन्य शास्त्रहरूका अनुसार यससम्बन्धमा निम्न मत प्राप्त छन्–

–धार्मिक कार्य सम्पन्न भएर "दक्षिणा" फल प्रदायक हुन्छ, त्यसैप्रकार देवी पनि सबै कर्मफलहरूको सिद्धि प्रदान गर्ने हुनाले दक्षिणा काली हुनुहुन्छ ।

–भगवती कालीको सर्वप्रथम आराधना दक्षिणामूर्ति भैरवले गरे, यसकारण पनि भगवतीलाई दक्षिणा काली भनिन्छ ।

– सृष्टि क्रममा पुरुषलाई 'दक्षिण' तथा नारीलाई 'वाम' भनिन्छ । भगवती काली, जो नारी हुनाले वामा हुनुहुन्छ, उहाँ दक्षिणा (पुरुष) माथि विजय प्राप्त गरेर महामोक्ष प्रदायिनी बन्नुभयो, अत: दक्षिणा काली भनियो ।

# तन्त्रलाई नपछ्याएसम्म दसैं...

**सर्व विघ्ना विनश्यन्ति शतचण्डी विधौ कृते**
**रोगाणां वैरिणां नाशो धनपुत्रसमृद्धयः**
**शंकरस्य भवान्या वा प्रसादान्निकटे शुभम् ।**
**एवं कृते जगद्वश्यं सर्वे नश्यंत्थुपद्रवाः**
**राज्यं धनं यशः पुत्रानिष्टमन्यल्लभेत सः ॥**
**(रुद्रयामल तन्त्र)**

अर्थात् जो साधक नवरात्रिमा दुर्गाको अनुष्ठान विधिपूर्वक गर्दछ उसका सारा विघ्न शान्त हुन्छन्, रोग र वैरीहरूको नाश हुन जान्छ, धन र समृद्धि बढ्दछ, शंकर र भवानीको प्रसादबाट सुख निकट आउँछ, उपद्रव नष्ट हुन्छन्, राज्य, धन, पुत्र, यश अथवा अन्य जे पनि अभीष्ट छन्, ती सबै साधकलाई प्राप्त हुन्छ नै ।

नवरात्रिभरि हामीले जीवनमा कैयौँपटक दुर्गाको पूजा, अर्चना गरिसक्यौं, कैयौँपटक दसैंमा आफूभन्दा ठूलाको हातबाट आशीर्वादको रातो टीका थापिसक्यौं तर रुद्रयामल तन्त्रले भनेजस्तै अत्यन्तै लोभलाग्दा अवस्थाहरू हाम्रा जीवनमा आएका छन् कि छैनन्, सोच्नु पर्ने भएको छ ।

यदि जीवनमा स्वास्थ्य, समृद्धि, धन, यश, पुत्रादि प्राप्त भएका छैनन्, यदि हाम्रा रोग, व्याधिहरू यथावत् छन् र हाम्रा वैरीहरूले अझै हामीमाथि आधिपत्य जमाउँछन् भने दसैं मान्ने क्रममा कतै न कतै हामीले गल्ती गऱ्यौं, कतै न कतै हामी चुक्यौं, कहीं न कहीं हामीले ती विधि-विधानलाई अवलम्बन गरेनौं जसको कारण दसैं मनाउने क्रममा हामीले भगवती दुर्गाको अनगिन्ती पूजा गरेता पनि, उहाँलाई रिझाउने प्रयास हामीबाट भएता पनि, खुशी पार्ने प्रयत्न भएता पनि 'हातमा लाग्यो शून्य' भएको छ । हाम्रो स्थिति त रुद्रयामल तन्त्रले भनेको कुराको ठीक उल्टो पो हुँदैछ– हाम्रो दशा दिनदिनै खस्केको छ, हाम्रो स्वास्थ्य गिर्दो छ, धन-सम्पत्ति, वैभवको प्राप्तिको त के कुरा, भएको पनि गुम्दो छ, शत्रु हामीमाथि हावी छन् ।

यसको अर्थ हो– हामीले नवरात्रि अनुष्ठान विधिपूर्वक गरेनौं । हामीले दसैंको मूल स्वरूपलाई बिर्सियौं, यसको तान्त्रोक्त रहस्यलाई बिर्सेर खाली सतहीरूपमा पूजाआजा, खानपान र मनोरञ्जनमा मात्र भुल्यौं । रुद्रयामल तंत्रको कुरा यदि हाम्रो जीवनमा लागू हुँदै गएको हुँदो हो त हाम्रो स्थिति प्रत्येक दसैंपश्चात् सम्पन्न, आरोग्यशाली र वैभवशाली हुनुपर्ने हो । यहाँसम्म कि हाम्रो अभीष्ट भनेको हाम्रो आत्मा हो, त्यो पनि प्राप्त हुनुपर्ने हो । तर आत्मोन्नतिको त के कुरा प्रत्येक वर्ष दसैं मान्ने बेलामा हाम्रो सामु अभाव, दीनता, रोग, शत्रु प्रबल भएर आउँछन् र हाम्रो हरेक वर्षको दसैंलाई दशामा परिणत गरेर जान्छन् । यस्तो तबसम्म हुन्छ जबसम्म हामीले तान्त्रोक्त विधिलाई पछ्याएर दसैं मनाउँदैनौं ।

विभिन्न मिष्ठान्न, खाद्यपदार्थ, फलफूल र पेय पदार्थबाट दसैंमा हुनसम्म र भ्याएसम्म मनोरञ्जन लिइन्छ र प्रसन्न भइन्छ, अनेक थरिका, नयाँ-नयाँ पोशाक-पहिरनले सजिसजाउ भएर विभोर भइन्छ । तर एकाध विकृतिलाई छोडेर खाने-खुवाउने

# रक्तकाली मन्दिर

**भारतको विहार राज्यको सहरसा शहरमा माता रक्तकालीको एउटा सुन्दर मन्दिर रहेको छ जसलाई मत्स्यगन्धा मन्दिर पनि भनिन्छ । सो मन्दिर अण्डाकार रूपमा निर्मित छ र मन्दिरका भित्री भित्ताहरूमा चौसठ्ठी योगिनीको चित्र कोरिएको छ ।**

**सो मन्दिको दर्शनार्थ देश विदेशका भक्तजनहरू घुइँचो लाग्ने गर्दछ ।**

र लाउने-लगाइदिने कुरामा त्यति साह्रो चिन्ता लिनु नपर्ला । चिन्ता त यस कुरामा मान्नुपर्दछ– प्रत्येक दसैंपछि हाम्रो स्थिति अधोगतितिर गइरहेको छ ।

मूलतः दसैं तान्त्रिक पद्धतिअनुसार मनाइने भएको हुनाले पनि दसैंको आफ्नै महत्त्व, गरिमा र महिमा छ । नवरात्रिको तात्पर्य नाचगान र मनोरञ्जन होइन, यो त साधनाको दिवस हो । नवरात्रिपछि दसौं दिनमा हामी भगवती दुर्गाको आराधनाबाट जीवनका बाधाहरूलाई हटाई त्यसबाट प्राप्त आनन्दानुभूतिस्वरूप विजयोत्सव मनाउँछौं । त्यसैले यसलाई विजयादशमी भनिन्छ । नौ दिनसम्म दुर्गाका विभिन्न स्वरूपलाई पूजा, अर्चना र भक्ति गरिसकेपछि प्राप्त जीत नै विजयादशमी हो । दसैंको गूढ रहस्यलाई नखोतलिकन, यसका तान्त्रिक विधि-विधानलाई नजानिकन दसैं मनाउनु आत्मोन्नतिको महान् अवसरलाई गुमाउनु हो र यो नै अहिले सबैभन्दा ठूलो चिन्ताको विषय बन्न पुगेको छ ।

तन्त्रमा विशेष मुहूर्त, साधना दिवस अत्यन्त महत्त्वपूर्ण हुन्छन् । यी विशेष दिवस भगवान्को प्रार्थनाका साथसाथै इतिहासका कैयौं विशेष घटनाहरूसँग जोडिएका हुन्छन्, साथै यी दिवसहरूमा एउटा विशेष चेतना हुन्छ जसले मनुष्यलाई आत्मसाक्षात्कार र दिव्यताको बाटो देखाउँछ । वास्तवमा जीवनको उद्देश्य भनेको नै आफ्नो बाह्य प्रकृतिलाई, आफ्नो बाह्य स्वरूपलाई भित्रको स्वरूपसँग मिलाउनु हो, त्यस स्वरूपसँग जोडिदिनु हो जो पूर्ण शुद्ध एवं उच्चतम छ र त्यसको लागि पहिलो प्रयास यही हो कि साधकले आफूलाई अशुद्धि, वासनाहरूबाट टाढा राखोस्, जीवनसँग जोडिएका राक्षसी प्रवृत्ति समाप्त होस् तथा आफ्नो शुद्ध रूपको पहिचान होस् र त्यस परम सत्यलाई प्राप्त गरोस् जसको लागि उसलाई यो जीवन प्राप्त भएको छ ।

यस शुद्धिकरणको प्रक्रियालाई जीवनमा जहिले प्रारम्भ गरे पनि हुन्छ तर नवरात्रिमा यस क्रियाको प्रारम्भले विशेष महत्त्व राख्दछ किनकि दसैंमा शक्ति तत्त्व वातावरणमा विशेषरूपमा जाग्रत रहन्छ, त्यसैले यो चैतन्य साधना काल हो । यसबेला जो साधक आफ्नो साधनामा बस्दछ उसभित्र एउटा विशेष प्रकारको क्रिया प्रारम्भ हुन जान्छ । त्यस क्रियामा मानसिक अशुद्धिको निवारण भएर शुद्ध शक्ति तत्त्व जाग्रत हुन लाग्दछ ।

र, दसैंको वास्तविक पक्ष यही हो, यही पक्षलाई बुझ्न नसक्दा र बुझाउन नसक्दा दसैंका कतिपय कुरालाई ठट्टाको रूपमा, हौवाको रूपमा लिने गरिन्छ । दसैंको प्रत्येक दिनले 'शक्ति'तर्फ इंगित गरेको छ । गृहस्थ होस् वा संन्यासी, योगी होस् वा ज्ञानी सबैलाई उत्तिकै आवश्यक छ शक्ति । बिनाशक्ति शिव पनि शवजस्तै हुन्छन् भन्ने कथन पाइन्छ । त्यसैले शक्ति आर्जनका लागि हामी नवरात्रिमा देवीको उपासना, आराधना गर्छौं ।

तन्त्र नै त्यो मार्ग हो जसले शक्ति आर्जन शीघ्र गराउँछ । त्यसैले दसैंमा प्रत्येक कार्यहरू तान्त्रोक्त प्रकारले सम्पन्न हुन्छन् । यद्यपि विभिन्न जातजाति र सम्प्रदाय विशेषको दसैं मान्ने तरीका फरक-फरक भए पनि सबै तरीकाहरूमा तन्त्रको नै प्रयोग विशिष्टरूपमा हुन्छ । काठमाडौं उपत्यकाभित्र अझै नेवारी सम्प्रदायमा त तन्त्रबिना दसैंको केही कुरा पनि अगाडि बढ्दैन । तान्त्रिकरूपमा हुने दसैंका सबै पक्षमा नेवारी सम्प्रदायमा 'मोनि' जमाउने पद्धति पनि विशेषरूपमा हुन्छ र यस मोनिले प्रत्येक वर्ष आफ्ना इष्टहरूको चिनारी दिइरहने कुरालाई तन्त्रको विशिष्ट पक्ष मान्न सकिन्छ । यसप्रकार प्रत्येक सम्प्रदाय र जातजातिमा आ-आफ्नै मौलिक किसिमका तान्त्रिक पक्षलाई उद्घादित गर्ने तान्त्रक पक्ष हुन्छन् जसलाई दसैं मान्ने क्रममा प्रयोग गर्दा दसैंको आफ्नो मौलिक स्वरूप पनि नबिग्रने र दसैंको ध्येय पनि पूरा हुने कुरामा शंका रहन्न । घटस्थापनाको दिनमा जमरा राख्ने, त्यसपछिका प्रत्येक दिनमा तान्त्रोक्त विधिबाट पूजा, आराधना गर्ने र दसैंका प्रमुख दिनहरू सप्तमी, अष्टमी, नवमीमा विशेष पूजन, हवन, खानपानसम्म पनि तान्त्रोक्त पद्धतिबाट सम्पन्न हुन्छन् । दशमीको दिन ठूलाबाट आशीष थाप्दा पनि तन्त्रको नै प्रयोग हुन्छ । यही तान्त्रोक्त पक्षलाई सबल र ज्युँदो राख्न सके रुद्रयामल तन्त्रले भने जस्तै हाम्रो जीवनमा पनि ऐश्वर्य, धन, सम्पत्ति, पुत्रादि प्राप्त हुने कुरामा शंका गरिरहन नपर्ला ।

जय गुरुदेव !

# नवार्ण मन्त्र जप विधि

रात्रिसूक्त पाठ गरेपछि नवार्ण मन्त्रको विनियोग, न्यास, ध्यान आदि यसप्रकार गर्नुपर्दछ–

*विनियोगः*

ॐ **अस्य श्रीनवार्णमन्त्रस्य ब्रह्मविष्णुरुद्राऋषयः, गायत्र्युष्णिगनुष्टुभश्छन्दांसि, श्रीमहाकालीमहालक्ष्मीमहासरस्वत्योदेवताः ऐं बीजम्, ह्रीं शक्तिः, क्लीं कीलकम्, श्रीमहाकालीमहालक्ष्मीमहासरस्वती प्रीत्यर्थे जपे विनियोगः ॥**

यो विनियोग पढेर जल भुइँमा छोड्नुहोस् ।

*ऋष्यादिन्यासः*

ॐ **ब्रह्मविष्णुरुद्रऋषिभ्यो नमः शिरसि । ॐ गायत्र्युष्णिगनुष्टुप्छन्दोभ्यो नमः मुखे । ॐ श्रीमहाकालीमहालक्ष्मीमहासरस्वती देवताभ्यो नमः हृदि । ॐ ऐं बीजाय नमः गुह्ये । ॐ ह्रीं शक्तये नमः पादयोः । ॐ क्लीं कीलकाय नमः नाभौ ।**

*करन्यासः*

**ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे ॥**

यस मूल मन्त्रले हात शुद्ध गरेर करन्यास गर्नुहोस्-

**ॐ ऐं अङ्गुष्ठाभ्यां नमः । ॐ ह्रीं तर्जनीभ्यां नमः । ॐ क्लीं मध्यमाभ्यां नमः । ॐ चामुण्डायै अनामिकाभ्यां नमः । ॐ विच्चे कनिष्ठिकाभ्यां नमः । ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे करतलकरपृष्ठाभ्यां नमः ।**

*हृदयादिन्यासः*

**ॐ ऐं हृदयाय नमः । ॐ ह्रीं शिरसे स्वाहा । ॐ क्लीं शिखायै वषट् । ॐ चामुण्डायै कवचाय हुम् । ॐ विच्चे नेत्रत्रयाय वौषट् । ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे अस्त्राय फट् ।**

अक्षरन्यास- दाहिने हातले स्पर्श गर्नुहोस्-

**ॐ ऐं नमः शिखायाम् । ॐ ह्रीं नमः दक्षिणनेत्रे । ॐ क्लीं नमः वामनेत्रे । ॐ ह्रीं नमः दक्षिणकर्णे । ॐ मुं नमः वामकर्णे । ॐ डां नमः दक्षिण-नासापुटे । ॐ ऐं नमः वामनासापुटे । ॐ विं नमः मुखे । ॐ च्चें नमः गुह्ये । ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे ।**

अन्त्यमा दुवै हातले शिरदेखि खुट्टासम्म सर्वाङ्गमा स्पर्श गर्नुहोस्-

*दिङ्न्यासः*

प्रत्येक दिशामा चुट्की बजाउनुहोस्–

**ॐ ऐं प्राच्यै नमः । ॐ ऐं आग्नेय्यै नमः । ॐ ह्रीं दक्षिणायै नमः । ॐ ह्रीं नैर्ऋत्यै नमः । ॐ क्लीं प्रतीच्यै नमः । ॐ क्लीं वायव्यै नमः । ॐ चामुण्डायै उदीच्यै नमः । ॐ चामुण्डायै ऐशान्यै नमः । ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे ऊर्ध्वायै नमः । ॐ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे भूम्यै नमः ।**

*अथ ध्यानम्*

**खड्गं चक्रगदेषुचापपरिघाञ्छूलं भुशुण्डीं शिरः, शङ्खं सन्दधतीं करैस्त्रिनयानां सर्वाङ्गभूषावृताम् । नीलाश्मद्युतिमास्यपाददशकां सेवे महाकालिकां यामस्तौत्स्वपिते हरौ कमलजो हन्तुं मधुं कैटभम् ॥१॥ अक्षस्रक्परशुं गदेषुकुलिशं पद्मं धनुष्कुण्डिकां, दण्डं शक्तिमसिं च चर्म जलजं घण्टां सुराभाजनम् ॥ शूलं पादसुदर्शने च दधतीं हस्तैः प्रसन्नाननां सेवे सैरिभमर्दिनीमिह महालक्ष्मीं सरोजस्थिताम् ॥२॥ घण्टाशूलहलानि शङ्खमुसले चक्रं धनुः सायकं, हस्ताब्जैर्दधतीं घनान्तविलसच्छीतांशु-तुल्य-प्रभाम् ॥ गौरीदेहसमुद्भवां त्रिजगतामाधारभूतां महापूर्वामत्र सरस्वतीमनुभजे शुम्भादिदैत्यार्दिनीम् ॥३॥**

*माला-पूजा*

**ॐ ऐं ह्रीं अक्षमालिकायै नमः ।**

*माला-प्रार्थना*

**ॐ मां माले माले महामाये सर्वशक्ति-स्वरूपिणि । चतुर्वर्गस्त्वयि न्यस्तस्तस्मान्से सिद्धिदा भव ॥ ॐ अविघ्नं कुरु माले त्वं गृह्णामि दक्षिणे करे । जपकाले च सिद्धचर्थं प्रसीद मम सिद्धये । ॐ अक्षमालाधिपतये नमः ॥ सुसिद्धि देहि देहि सर्वमन्त्रार्थसाधिनि साधय साधय सर्वसिद्धिं परिकल्पय परिकल्पय मे स्वाहा ।**

यसरी जपमालाको प्रार्थना गरी ढोगेर

**॥ ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे ॥**

यो नर्वाण मन्त्र १०८ पल्ट जप गर्नुहोस्-

**ॐ गुह्यातिगुह्यगोप्त्री त्वं**
**गृहाणाऽस्मत्कृतं जपम् ।**
**सिद्धिर्भवतु मे देवि**
**त्वत्प्रसादान्महेश्वरि ॥**

यो मन्त्रले श्रीदेवीलाई जप निवेदन गर्नुहोस् । अनि दुर्गाकवच पाठ गर्नुहोस् ।

जय गुरुदेव !

परमपुज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं माता नवदुर्गाको कृपा एवं आशीर्वादले सिद्धाश्रम शक्ति केन्द्रका सम्पूर्ण सम्पर्क कार्यालय, प्रस्तावित सम्पर्क कार्यालय, आरती सञ्चालन केन्द्रहरूको उत्तरोत्तर प्रगति होस् भनी प्रार्थना गर्दछौं ।

**कीर्तिपुर आरती सञ्चालन केन्द्रका सम्पूर्ण कार्यकर्ताहरू**

## हार्दिक आह्वान

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम अनुकम्पास्वरूप गोरखा जिल्लाको दरबार क्षेत्र (गोरख गुफाबाट केही तल) मा सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय दरबार क्षेत्रको आश्रम भवन निर्माणार्थ गुरु सेवा गर्ने सुभ–अवसर प्राप्त भएको सहर्ष जानकारी गराइन्छ । तन, मन, धनले गुरु सेवा गर्न चाहने सम्पूर्ण साधक/साधिका, भक्तजन तथा अन्य सबैले सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय गोरखा बजारमा सम्पर्क गर्नुहुन अनुरोध छ । नगद सहयोग गर्न चाहनु हुनेहरूले राष्ट्रिय वाणिज्य बैंक, बचत खाता नं. १९४८८ मा नगद जम्मा गर्न सक्नुहुनेछ ।

**सिद्धाश्रम शक्ति केन्द्र**

सम्पर्क कार्यालय गोरखा बसपार्क, गोरखा

**गौतम केमिकल्सबाट उत्पादित घरायसी सरसफाइका सामानहरु**

● फिनेल ● हर्वल फिनेल
● ट्वाइलेट क्लिनर ● झोल साबुन
● एसिड ● लिम पाउडर

सम्पर्कः ९८५१०८३९९२

# सिद्धकुञ्जिकास्तोत्रम्

शिव उवाच-

शृणु देवि प्रवक्ष्यामि कुञ्जिकास्तोत्रमुत्तमम् ।
येन मन्त्रप्रभावेण चण्डीजापः शुभो भवेत् ॥१॥
न कवचं नाऽर्गलास्तोत्रं कीलकं न रहस्यकम् ।
नऽसूक्तं नाऽपि ध्यानं च न न्यासो न च वाऽर्चनम् ॥२॥
कुञ्जिकापाठमात्रेण दुर्गापाठफलं लभेत् ।
अति गुह्यतरं देवि देवानामपि दुर्लभम् ॥३॥
गोपनीयं प्रयत्नेन स्वयोनिरिव पार्वति ।
मारणं मोहनं वश्यं स्तम्भनोच्चाटनादिकम् ।
पाठमात्रेण संसिद्धयेत् कुञ्जिकास्तोत्रमुत्तमम् ।

अथ–मन्त्रः

'ॐ' ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे। ॐ ग्लौं हुं क्लीं जूं सः ज्वालय ज्वालय ज्वल ज्वल प्रज्वल प्रज्वल ऐं ह्रीं क्लीं चामुण्डायै विच्चे, ज्वल हं सं लं क्षं फट् स्वाहा ॥

॥ इति मन्त्रः ॥

"नमस्ते रुद्ररूपिण्यै नमस्ते मधु–मर्दिनि ।
नमः कैटभहारिण्यै नमस्ते महिषार्दिनी ॥१॥
नमस्ते शुम्भहन्त्र्यै च निशुम्भाऽसुरघातिनि ॥२॥
जाग्रतं हि महादेवि जपं सिद्धं कुरुष्व मे ।
ऐंकारी सृष्टिरूपायै ह्रींकारी प्रतिपालिका ॥३॥
क्लींकारी कामरूपिण्यै बीजरूपे नमोऽस्तु ते ।
चामुण्डा चण्डघाती च यैकारी वरदायिनी ॥४॥
विच्चे चाऽभयदा नित्यं नमस्ते मन्त्ररूपिणि ॥५॥
धां धीं धूं धूर्जटेः पत्नी वां वीं वूं वागधीश्वरी ।
क्रां क्रीं क्रूं कालिका देवि शां शीं शूं मे शुभं कुरु ॥६॥
हुं हु हुंकाररूपिण्यै जं जं जं जम्भनादिनी ।
भ्रां भ्रीं भ्रूं भैरवी भद्रे भवान्यै ते नमो नमः ॥७॥
अं कं चं टं तं पं यं शं वीं दुं ऐं वीं हं क्षं ।
धिजाग्रं धिजाग्रं त्रोटय त्रोटय दीप्तं कुरु कुरु स्वाहा ॥८॥
पां पीं पूं पार्वती पूर्णा खां खीं खूं खेचरी तथा ।
सां सीं सूं सप्तशती देव्या मन्त्रसिद्धिं कुरुष्य मे ॥९॥
इदं तु कुञ्जिकास्तोत्रं मन्त्रजागर्तिहेतवे ।
अभक्ते नैव दातव्यं गोपितं रक्ष पार्वति ॥१०॥
यस्तु कुञ्जिकया देवि ! हीनां सप्तशतीं पठेत् ।
न तस्य जायते सिद्धिररण्ये रोदनं यथा ॥१०॥

॥ इति श्रीरुद्रयामले गौरीतन्त्रे शिवपार्वती–संवादे कुञ्जिकास्तोत्रं सम्पूर्णम् ॥

शिव महिम्न स्तोत्रका रचयिता पुष्पदंत थिए जसको दाँत शिवलाई गुरु बनाएपछि गुलाबजस्तै फुल्दथ्यो र सम्पूर्ण शरीरबाट सुगन्ध प्रवाहित हुन्थ्यो । त्यसैले स्वयं शिवले उनको नाम पुष्पदंत राख्नुभएको थियो । उनले शिवमहिम्न स्तोत्रको रचना गरे । त्यस श्लोकमा भगवान् शिवलाई एउटा अद्भुत रीतिले वर्णन गरिएको छ ।

उनले भनेका छन् कि प्रत्येक क्षण सार्थकता एवं जीवन्ततायुक्त हुन्छ, प्रत्येक क्षण उपयोगी हुन्छ, बितेको एक क्षण पनि फर्केर आउँदैन । आज तपाईंको साथमा गुरु हुनुहुन्छ, तर तपाईं भने उहाँको सामु हुनैपर्छ, उहाँबाट दीक्षा प्राप्त गर्नैपर्छ वा त्यो ज्ञान प्राप्त गर्न सकियोस् जसद्वारा पाप समाप्त भएर पुण्यको उदय हुन्छ, फेरि यस्तो क्षण आओस्, यो आवश्यक छैन ।

तब त उस्तै क्षण फर्केर आउँदैन, एकपटक एउटा मनुष्यको रचना भइसकेपछि उस्तै आकृतिको दोस्रो मानिसको रचना हुन सक्दैन । एउटा पिताका चार पुत्र छन् भने चारैजनाको रूप, आकृति, स्वभाव, संस्कार अलग-अलग हुन्छन् चाहे तिनीहरू जुम्ल्याहा नै किन नहुन् ।

त्यसैले एक क्षण विशेषमा गरिएको कार्यले नै जीवनमा पूर्णता दिन सक्छ र जीवनको अपूर्णता यसैले हुन्छ किनकि हाम्रो मन आफैमा आन्दोलित वा डामाडोल हुन्छ, निर्णय गर्न पाउँदैन ।

तर समुद्रमा छलांग नलगाइकन, जोखिम नउठाइकन समुद्रलाई, जीवनलाई पार गर्न सकिन्न । जसले जीवनमा च्यालेन्ज लिन्छ, जो आफैमा बलिदान गर्न सक्ने हुन जान्छ उसले केही प्राप्त गर्न सक्दछ ।

जसले पहिले आफ्नो घर जलाउँछ, आफूभित्रका विकारलाई जलाउँछ, आफ्ना विचारहरूद्वारा लोभ, लालच, स्वार्थ, मोह समाप्त गर्दछ उसको लागि नै क्षण छ, क्षणको महत्त्व छ ।

# तपाई पनि अद्वितीय बन्नुहोस्

परमपूज्य सद्‌गुरुदेव स्वामी श्री निखिलेश्वरानन्द महाराज

जीवनमा त लोभ, लालच उत्पन्न हुन्छ नै, तर एक क्षण मात्र भए पनि गुरुका साथ रहन सकियो भने यी दुर्गुण मेटिन सक्छन् । फेरि मेटिन्छ वा मेटिन्न कुनै आवश्यक छैन किनकि फेरि त्यस्तो क्षण आउँछ वा आउँदैन । कुनै जरुरी छैन कि त्यही नक्षत्र, त्यही तिथि, त्यही मुहूर्त फेरि स्थापित होस् ।

भगवान् शिवले भन्नुभएको छ कि म क्षण-क्षण परिवर्तित छु र जो परिवर्तित हुन्छ त्यो जीवित हुन्छ, उही अद्वितीय हो, श्रेष्ठ हो ।

जीवनमा गृहस्थ जीवन पनि अत्यन्तै आवश्यक छ, म यो स्वीकार गर्दछु, तर यस कुरालाई पनि स्वीकार गर्दछु कि संन्यास जीवन यसभन्दा पनि धेरै महत्त्वपूर्ण छ । अझ यसभन्दा पनि महत्त्वपूर्ण गृहस्थमा रहेर पनि संन्यासी जीवन जिउनु हो ।

घरबार छोड्नुलाई संन्यास भनिँदैन, घरमा रहनेलाई पनि गृहस्थ भनिँदैन, पत्नीसँग बस्नाले मात्रै पनि गृहस्थ भएको मानिन्न, छोरा जन्मँदैमा पनि गृहस्थ हुँदैन । भगवान् कृष्णलाई पूर्ण योगीराज भनिएको छ जसले गोपीहरूसँग प्रेम गर्दथे, जो १६००० रानीहरूका पति थिए– तर पनि योगीराज कहलिए ।

त्यसैले यो शब्द मनबाट उद्भूत छ, विचारहरूबाट उद्भूत छ, तपाईंको विचार एक क्षण विशेषमा कमजोर भएमा त तपाईं चुक्नुभयो, त्यस क्षणलाई गुमाउनु भयो जुन क्षण फर्केर आउँदैन । हृदय बारम्बार परिवर्तन हुन्छ, मनमा बारम्बार तर्क-वितर्क, शंका, भ्रम उत्पन्न हुन्छन्, यसलाई कसरी हटाउने ? कसरी यो हट्दछ ?

किनकि हरेक पटक र हरेक क्षण राम्राभन्दा राम्रा योगीहरूमा मात्र होइन, तपाईंमा पनि यो तर्क-वितर्क उत्पन्न भइरहन्छ ।

यो सही छ कि छैन, यो कार्य गर्नु उचित छ कि छैन, जसले यसप्रकारको विचार वा शंका राख्दछ त्यसले एउटा पशु जीवन जिउँछ र मर्दछ । जसले जीवनमा दृढ निश्चय गर्दछ कि मलाई यस मार्गमा बढ्नुछ र सबै छोड्नुछ, १६००० रानीहरू भएर पनि मैले आफ्नो कार्यलाई सम्पन्न गर्नुछ, आफ्नो पर्सन्यालिटीलाई उच्चता प्रदान गर्नुछ, त्यो व्यक्तिले अद्वितीयता प्राप्त गर्दछ नै, नि:सन्देह गर्दछ ।

तपाईंको पर्सन्यालिटी, तपाईंको व्यक्तित्व र तपाईंको धारणा, तपाईंको चिन्तन, तपाईंको कार्य केवल तपाईंकै महत्त्वपूर्ण होला । तपाईंको पिताको नामबाट तपाईंको नाम स्मरण गरिन्छ भने तपाईं मर्नका लागि योग्य हुनुहुन्छ र जो छोराको नामबाट चिनिन्छ, त्यो अधम हुन्छ ।

जो आफ्नै कार्यबाट, आफ्नो व्यक्तित्वबाट लोकमा विख्यात् हुन्छ, उही सर्वत्र विजयी हुन्छ । त्यसैले आफ्नो व्यक्तित्वलाई निखार्न आवश्यक छ र यस सम्बन्धमा हाम्रो जीवनमा सैकडौं, हजारौं उदाहरणहरू पाइन्छन् ।

रामको उदाहरणलाई लिऔं, आफ्नो व्यक्तित्व निखार्नका लागि जंगलमा गए किनकि उच्चकोटिका साधनाहरू सम्पन्न गर्न

सकियोस्, रावणलाई मारेर संसारमा विख्यात् हुन सकियोस् ।

कृष्णले भने– अरु कुनै बाटो थिएन । आफ्नो पूरा जीवनमा उनले आफ्ना आमा-बुबा वसुदेव र देवकीसँग केवल २२ दिन रहे । आफूलाई जन्म दिनेसँग जीवनमा यति थोरै दिनको मिलन ! उनको समय धेरै त गोकुलमा बित्यो– नन्द र यशोदाको साथ । मथुरा आए त केवल २२ दिन बसे, २२ दिनमा पनि २ वा ४ पटक मात्र भेटे होलान् । कृष्णले भने– आमा-बुबाको कारणबाट मेरो नाम चम्कदैन । मलाई यदि केही बन्नु छ भने केही यस्तो गरूँ कि अद्वितीय बन्न सकूँ, यस्तो गरूँ जुन मानिसहरूले गरेकै छैन ।

प्रेम गर्नु हेय सम्झने बेलामा उनले प्रेम गरेर देखाए । समाजले जे गर्ला गरोस्, म राधालाई लिएर घुम्छु समाजलाई जे इच्छा छ गरोस् । एउटा विद्रोहको भावना थियो उनमा । उनले भने कि यदि मथुरा मेरो लागि सुटेबल छैन, मेरो व्यक्तित्वलाई निखार्नका लागि सही छैन भने म द्वारकामा आफ्नो राज्य स्थापित गर्छु र म त्यहाँको उच्चकोटिको राजा बन्छु, महाभारत युद्धमा सयौं, हजारौं मर्लान्, म भने आफ्नो व्यक्तित्वलाई सर्वोच्चता प्रदान गर्दछु ।

यही काम बुद्धले पनि गरे । एउटा राजकुमार भएर पनि घरबार छोडेर बुद्धत्वलाई प्राप्त गरे र बुद्धको नाम हामीलाई आज पनि याद छ, उनका छोरा वा बुबाको नाम हामीलाई याद छ वा छैन । महावीरले पनि यही गरे । गान्धीले पनि निश्चय गरे कि आफ्नो व्यक्तित्व निखार्नुछ । आफ्नो व्यक्तित्व निखार्नका लागि उनले न कस्तूरबातर्फ हेरे, न त चारै छोराहरूतर्फ । चारै छोराहरू आफैमा कुमार्गीजस्ता थिए । एकले मुसलमान धर्म ग्रहण गऱ्यो । अर्को गांधी जहाँ बसेर खाना खान्थे त्यहीं मासु र रक्सी लिन्थ्यो ।

तर गांधीले यी कुराहरूमा ध्यानै दिएनन् । उनले भने कि पुत्र आफ्नो ठाउँमा छन्, मेरो उनीहरूप्रति कर्तव्य थियो, त्यो मैले पूरा गरिदिएँ । अब उनीहरूका लागि मैले जीवन बरबाद गर्नु छैन, आफ्नो व्यक्तित्व निखार्नुछ ।

त्रेता युगको उदाहरणदेखि आजसम्मका उदाहरणमा म तपाईंसँग यही कुरा भनिरहेको छु कि तपाईंको व्यक्तित्व तपाईंको हो । तपाईंको पत्नीको वा बुबाको र तपाइँको आमाको वा भाइको व्यक्तित्व तपाईंको काममा आउँदैन । माथिका सबै उदाहरणमा उनीहरूले निश्चय गरे कि आफ्नो व्यक्तित्व निखार्नका लागि सबै कुरा त्याग गर्छु । यसपछि मात्र उनीहरू अद्वितीय बने ।

दीक्षाको अर्थ हो– भित्र ती विचारहरूलाई उत्पन्न गर्नु जसबाट तपाईंको व्यक्तित्व निखिन सकोस्, तपाईंमा एउटा धारणाशक्ति मजबूत हुन सकोस् । यदि दीक्षाको बारेमा म बारम्बार भन्दछु भने अवश्य केही तथ्य हुनुपर्दछ ।

उच्चकोटिका व्यक्तिले एकपटक मात्र भन्दछ भने पनि सामुन्ने बसेको श्रेष्ठ व्यक्तिले त्यसलाई आफ्नो हृदयमा भर्दछ । तर मूर्ख व्यक्तिलाई दश हजार पटक भन्दा पनि उसले भर्न सक्दैन र चेतनावान् व्यक्ति छ भने एकपटकको ठेस पनि धेरै हुन्छ ।

या त जीवनको जति पनि आयु बचेको छ– बीस, पच्चीस, तीस, कि त तपाईं ती बीस-पच्चीस सालमा आफ्नो व्यक्तित्वलाई १०-१२ टुक्रामा बाँडेर यसको बुबा हुँ, यिनको लोग्ने हुँ, यो मेरो नोकर हो, यो मेरो घर हो– यसप्रकार टुक्रा टुक्रामा विभाजित भएर मर्नुहोस्, चितामा जल्नुहोस्, वा उनीहरू आफ्नो ठाउँमा छन्, तपाईं आफ्नो ठाउँमा हुनुहुन्छ, उनीहरू आफ्नो काम गर्दै रहन्छन्– कपूत

भए पनि कपूत नै किन नहुन्, मासु खान्छन् त खाइरहुन्, विवाह गरे त गरे, यस्तो विचार गर्नुहोस् । गान्धीले आफ्ना छोराहरूलाई कहाँसम्म सम्झाउन्, सम्झाएर पनि के हुन्थ्यो र ? उनको त एउटै निश्चय थियो– आफ्नो व्यक्तित्व निखार्ने ।

शास्त्र पनि यही भनिरहेको छ कि यस विषयमा हामीलाई केवल एउटा निश्चय गर्नुछ– यी सबै कुरा त चलिरहन्छन्, त्यसका लागि तपाईं दुःखी नहुनुहोस् । ज्वरो आएमा तपाईं चिन्तित नहुनुहोस्, टाउको समाएर नबस्नुहोस्, छोराले यदि पढ्दैन भने नपढोस्, तपाईंले भन्दैमा मात्रै पनि पहिलो श्रेणी त आउँदैन । तपाईं उसलाई पिट्नुहुन्छ, उसको पछि-पछि लाग्नुहुन्छ र आफ्नो व्यक्तित्वलाई टुक्रा-टुक्रा गर्नुहुन्छ । आधाभन्दा बढी यसरी नै बिताइसक्नु भयो, अब बाँकी आधा पनि यसरी नै बिताउनुहुनेछ । मैले भनेर केही फरक पर्ने छैन ।

यसैले पर्दैन किनकि एकपटक कोर्दा सलाईको काँटी बल्दैन भने दोस्रो, तेस्रो, चौथो गरेर पाँचौं पटकमा बल्दछ । एकपटक दीक्षाबाट भएन भने दोस्रो, तेस्रो, चौथो वा पाँचौ पटकमा दृढ संकल्प आउँछ कि मैले आफ्नो जीवनलाई धेरै उँचो उठाउनुछ ।

गुरुले भन्नुभयो कि तिमीलाई सूर्य बन्नु छ भने बसी-बसी त सूर्य बन्दैन । तपाईं बन्नुहुनेछ आफ्नो व्यक्तित्वको कारण । यसका लागि व्यक्तित्वलाई टुक्रा-टुक्रा हुनबाट बचाउनु पर्दछ । श्रीमती आउँछिन् भने बस्छिन्, छोराले भनेको मान्छ भने मान्छ, म किन चिन्ता गरुँ । मेरो कर्तव्य थियो कि गृहस्थ हुनु पर्दथ्यो, श्रीमती हुनु पर्दथ्यो, पुत्र हुनु पर्दथ्यो । वंश चल्छ भने चल्छ, चल्दैन भने चिन्ता के का लागि ?

कबीरको कुन वंश चलिरहेको छ ? मीराको कुन वंश छ ? वंश आवश्यक छैन । मलाई आफ्नो व्यक्तित्व निखार्नुछ, आफ्नो ज्ञान उत्पन्न गर्नुछ, मेरो मृत्युको २००० वर्षपछि पनि आकाशमा इन्द्रधनुषको रंगबाट मेरो नाम लेखिएको हुनुपर्दछ, यो जीवनमा जरुरी छ । मेरा गुरुदेवले पनि यही कुरा मलाई बताउनु भएको थियो । उहाँले भन्नुभएको थियो कि तिमी काम गर, तिमीलाई केवल आफ्नो व्यक्तित्व निखार्नुछ, यसका लागि तिमीले धेरै परिश्रम गर्नु पर्ला, हिमालयको कुना-कुना धाउनु पर्ला, भोकै मर्नु पर्ला, कठिनाइको सामना गर्नु पर्ला, र तिमीले अवश्य कठिनाइलाई झेल, म आशीर्वाद दिन्छु कि तिमीमाथि विपत्ति आओस्, अत्यन्तै कठिनाइ आओस्, अत्यन्तै संघर्ष आओस् तब तिमी निखिन सक्छौ । यसका साथसाथै एउटा काम अर्को गर कि धोतीको छेउमा एउटा गाँठो पार, हरेकपटक धोती लाउँदा यो गाँठो भइरहोस्, गाँठो हातमा पर्दा याद आउँछ कि मलाई आफ्नो व्यक्तित्व निखार्नु छ, होइन भने तिमीले बिर्सनेछौ ।

जबसम्म म संन्यासी थिएँ, गाँठो बाँधे, गुरुले भन्नुभएको थियो– यो काम गर्नुछ, यस बाटोमा पनि हिँड्नुछ, हिमालयलाई पनि छाम्नुछ, सिद्धाश्रममा पनि पुग्नुछ ।

तपाईंमा कहीं कुनै कमी छैन– कृष्णसँग पनि दुई हात थिए, तपाईंसँग पनि दुई हात छन् । कृष्णमा, राममा र तपाईंमा केही भिन्नता छैन । आइन्स्टाइनको माइन्ड र तपाईंको माइन्ड बराबर छ, गान्धीको माइन्ड कुनै चौगुणा थिएन, एक धक्का दिएमा चार फुट पर लड्ने खालको शरीर थियो, लठ्ठीबिना हिँड्न सक्दैनथे, तर व्यक्तित्व अद्वितीय थियो ।

उनमा एउटा चिन्तन थियो कि मलाई आफ्नो पर्सन्यालिटी बनाउनु छ, मलाई सूर्य बन्नुछ । यसका लागि गान्धीले कर्मयोगको, क्रियायोगको, कुण्डलिनी जागरणको दीक्षा लिए र सहस्रार भेदनका लागि बारम्बार प्रयत्न गर्दैरहे– कुनै गुरु प्राप्त होस् जसले सहस्रार भेदन गरिदिन सकोस् । गान्धीको जीवनी पढ्नुहोस् तपाईं ।

**किन थिए यस्तो ?**

किनकि यसैप्रकार सर्वोच्चता प्राप्त हुन सक्छ । यसै त जसले काम गर्दछ उसलाई गाली प्राप्त हुन्छ । मानिसहरू गाली गरून् हामी सुनौं, गाली सुन्दा आनन्द आओस्– केही अरु गाली पनि सुनौं । भगवान्‌ले दुईवटा कान दिनुभएको यसैले हो कि एउटाबाट गाली आए अर्कोबाट निक्लियोस्, आफूसँग त राख्दै नराख्नुस् । तपाईं न उत्तेजित हुनुहोस्, न कुरा नै गर्नुहोस् । तपाईं बराबर एउटै चिन्तन, एउटै लक्ष्य राख्नुस् कि व्यक्तित्व कसरी निखिन्छ ।

पुष्पदंतले पनि भनेका थिए कि जुन क्षण पनि महत्त्वपूर्ण छ, मलाई त्यसको प्रयोग गर्नु

छ र गर्दिन भने जीवनमा अरु धेरै क्षण त आउँछन् तर त्यो क्षण आउँदैन । कुनै जरुरी छैन कि पछिको क्षणमा गुरु साथमा हुनुहुनेछ र दीक्षा दिनुहुनेछ ।

मैले भनेँ कि एकपटक दीक्षा लिएरै निश्चिन्तता आउँछ भने अत्यन्तै राम्रो, तर आउँदैन भने दोस्रोपटक दीक्षा लेऊ, तेस्रोपटक लेऊ । यो जरुरी छैन कि एकपटक दीक्षा लिँदैमा तपाईँलाई सनातन धर्ममा एकदमै पूर्णता प्राप्त हुनेछ ।

दत्तात्रेयले २४ पटक दीक्षा लिए । रामले दुईपटक दीक्षा लिए– वशिष्ठसँग अलग्गै लिए, विश्वामित्रसँग अलग लिए । कृष्णले सांदीपनसँग दीक्षा लिए र आठजना अन्य गुरुहरूबाट अन्य दीक्षा लिए । उनले एकै गुरुबाट १०८ पटक दीक्षा लिए ।

प्रश्न दीक्षाको होइन, प्रश्न त कहिले यस्तो चिन्तन आउँछ, दृढ निश्चिन्तता आउँछ । शिव महिम्न स्तोत्रको भाव नै यो हो कि हामीले दृढ निश्चय गरौँ । यसै त तपाईं आज निश्चय गर्नुहुन्छ र भोलि बिर्सनुहुन्छ । यसकारण बिर्सनुहुन्छ कि तपाईंको हृदयमा त्यो आगो उत्पन्न भएकै छैन । त्यसैले त्यो ज्वाला उत्पन्न होस् र निश्चय गर्नुहोस् ।

कर्तव्य त चलिहाल्छ त्यसमा नअल्झिनुहोस्, मेरो ड्युटी छोरालाई केवल रोटी दिनु हो र आफ्नो लक्ष्यतर्फ बढिरहनु पर्दछ । तपाईंले हलुवा पकाएर खुवाउँदैमा छोराले तपाईंको खुट्टा समाउला भन्ने सम्भव छैन । त्यो त कपूत होला, जति माया गऱ्यो, त्यति नै गडबड हुन्छ ।

श्रीमतीलाई भन्नुहोस्– के समस्या छ ? उनीले भन्लिन्– टाउको दुखेको छ । तपाईं भन्नुस्– ठीक छ, टाउको दुखेको छ भने सुत, म आफ्नो काम गर्छु ।

जिन्दगीमा फेरि श्रीमतीको टाउको दुख्ने छैन । म यो भनिरहेको छैन कि आफ्नो कर्तव्यबाट भाग्नुस्, म यो पनि भनिरहेको छैन कि तपाईं गृहस्थबाट भाग्नुस् । घरमा रहेर नै संन्यासी बन्नुस्, न कसैसँग मोह, न कसैप्रति आसक्ति, न कसैप्रति क्रोध न त

कसैप्रति घृणा ।

भगवान् शिवजस्तै हामी बनौँ र शिव बन्नु जीवनमा जरुरी छ । शिवजस्तो व्यक्ति त छँदै छैन । ब्रह्मपछि सबै देवता बने र उनीहरूले आफ्नो पर्सन्यालिटी निखारे । शिवले आफ्नो पर्सन्यालिटी अर्कै ढंगले बनाउनु भयो, ब्रह्माले अलग ढंगले । शिवले पहिले सतीसँग विवाह गर्नुभयो । दक्षको यज्ञमा सतीको मृत्यु भएपछि पार्वतीसँग विवाह गर्नुभयो । केही कमाइ छैन, व्यापार वशको कुरा होइन, मात्र मसानमा बसिरहनु भयो । घर-गृहस्थी भए पनि बसिरहनु भयो मसानमा ।

म तपाईंको तुलना उहाँसँग गरिरहेको छु । घर उहाँको थिएन । पार्वती भन्छिन्– कमाएर ल्याउनुस् । मैले साँझ बच्चाहरूलाई के ख्वाउने ?

शिवका दुई सन्तानमध्ये एक गणेश, जसलाई जति खुवाए पनि कमै हुन्थ्यो किनकि पेट ठूलो थियो उनको । दोस्रो कार्तिकेयको मुखै ६ वटा थियो । ६–६ वटा मुख भर्नुपर्ने थियो । शिव भन्नुहुन्छ– बस, म त मसानमा बसेको छु, ख्वाउने हो भने पनि खुवाऊ, नखुवाउने हो भने नखुवाऊ, म त बसेको छु मसानमा बिल्कुलै निश्चिन्त ।

जति लडाइँ-झगडा तपाईंको घरमा हुँदैन त्यति शिवको घरमा हुन्छ । पार्वतीको वाहन हो सिंह र शिवको वाहन हो साँढे । सिंह र साँढेको झगडा भएमा शिव साँढेलाई समात्नुहुन्छ, पार्वती सिंहलाई ।

फेरि गणपतिको वाहन हो मुसा र शिवसँग कहिले साँप खाली नहुने । साँपले मुसालाई खान खोज्दा गणेशले बचाउँछन् । कार्तिकेयको वाहन मुजुरले शिवको गलामा भएको साँपलाई खान खोज्छ । शिव न कमाउनुहुन्छ, न त रोटीको व्यवस्था गर्नुहुन्छ, घरमा चालीस चालीस जना खान्छन्...

**शमशान्यां वासां भवतुं ।**

शिव भन्नुहुन्छ– म त मसानमा बसेको छु । मेरो इच्छा छ भने भेट्नू, घरको तिमी हेर्नू, तिम्रा छोराहरू हेरून्, मलाई कुनै चिन्ता छैन । उहाँले आफ्नो पर्सन्यालिटी निखार्नुभयो र भगवान् शिव कहलिनु भयो र तपाईं बेकार टेन्शन लिनुहुन्छ कि श्रीमतीलाई टाउको दुखेको छ, छोराले भनेको टेर्दैन ।

तपाईंले उनीहरूलाई आफ्नै ठाउँमा छोडिदिनुहोस्, आफ्नो व्यक्तित्वलाई ध्यान दिनुहोस्, तपाईं हुनुहुन्छ भने जिन्दगी छ । त्यसैले पुष्पदंतले भगवान् शिवसँग प्रार्थना गरे कि हजूर मलाई एकपटक होइन, तबसम्म दीक्षा दिँदै रहनुहोस् जबसम्म मेरो मनमा विचार समाप्त हुँदैन । मभित्र ज्वाला उत्पन्न होस् कि म यस्तो स्तोत्रको रचना गरूँ आउने पिँढीले मेरो व्यक्तित्वलाई याद राख्न सकोस् ।

यसप्रकारको अद्वितीयतालाई प्राप्त गरेर उनले ४० श्लोक लेखे जसको एक-एक श्लोकमाथि एक-एक ग्रन्थ लेख्न सकिन्छ र यसप्रकार उनले आफ्नो व्यक्तित्वलाई निखारे । तपाईं आफ्नो युगमा मार्गदर्शन गर्न चाहनुहुन्छ भने यो तब सम्भव हुनेछ जब तपाईंको व्यक्तित्व बन्छ । कुटिलताबाट तपाईं मार्गदर्शन दिन सक्नुहुन्न, छल र झूटले दिन सक्नुहुन्न, व्यभिचारबाट दिन सक्नुहुन्न । तपाईंमा सत्यता, इमान्दारी र शरीरमा शक्ति हुनुपर्दछ । यो दीक्षाबाट मात्र सम्भव छ । दीक्षाको अर्थ हो– गुरु शिष्यभित्र स्थापना हुनु । तब उसको व्यक्तित्व निखिन सक्छ र यस अद्वितीयतालाई प्राप्त गर्न उमेर बाधक छैन । तपाईं सय वर्ष बाँच्नु भए पनि समय कम हुन सक्छ र बीस वर्ष मात्र जिउनु होस् केही गर्नका लागि धेरै हुन्छ ।

अभिमन्यु सोह्र वर्ष मात्र बाँचे तर अर्जुन ८० वर्षमा मरे । दुवै विजयी भए तर अभिमन्युको जस्तो गति अर्जुनले प्राप्त गर्न सकेनन् । अभिमन्युले जस्तो साहस उनले गर्न सकेनन् । अभिमन्यु श्रेष्ठ बने किनकि उनले संघर्ष गरे, जुधे, बसेनन् । गीतामा अरू केही छैन । एक लाइनमा गीतालाई परिभाषित गर्ने हो भने गीताको मतलब हो– हे अर्जुन, तिमी उठ र काम गर, बाँकी म आफै सम्हाल्ने छु, तिमी आफ्नो खुट्टामा उभिऊ ।

म पनि यही गीता सम्झाइरहेको छु कि एकपटक तपाईं उठ्नुहोस्, गुरु तपाईंको पछि उभिनुभएको छ । तपाईंलाई संकल्प गर्नु छ त यसै क्षण गर्नुछ, दृढ निश्चय गर्नुपर्दछ कि मलाई यो गर्नु नैछ । तपाईंमा र आइन्स्टाइनमा, लिंकनमा, ईसा मसीहमा, ब्रह्मा, विष्णु र महेशमा कुनै अन्तर छैन । अन्तर छ त दृढ संकल्प शक्तिको अन्तर छ । चुनौति आओस्, म त भन्छु पाँच हजार चुनौति आओस्, हामी चुनौतिहरूको सामना गर्छौं । यसैले भगवान् शिवजस्तै बन्नुहोस् जसको गुणको वर्णन नै गर्न नसकियोस् । यति धेरै अद्वितीयता छ भगवान् शिवको व्यक्तित्वमा । यस्तै गुण तपाईंमा पनि होस्, दृढ निश्चिन्तता होस्, गुरुको शब्दबाट तपाईं आफ्नो मनलाई नियन्त्रण गर्नुस् र तपाईं अद्वितीय बन्नुहोस्– दीक्षाहरूको माध्यमबाट, साधनाहरूको माध्यमबाट, यही मेरो कामना छ ।

❑

## पत्रिका सदस्यता विस्तारका लागि हार्दिक आह्वान

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप गोरक्ष निखिल वाणी प्रकाशनको निरन्तरतालाई कायम राख्दै दशौँ वर्षमा प्रवेश गर्न सफल हुनाका साथै नेपाल सरकार, प्रेस काउन्सिलको पत्रिका वर्गीकरणमा 'क' श्रेणीमा पर्न सफल भएको सहर्ष जानकारी गराउँदै आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिकलाई यस स्तरसम्म लिएर आउने महान् कार्यमा सक्रियरूपमा सहभागी सबैलाई हार्दिक धन्यवाद दिन चाहन्छौँ । यस मासिकलाई अझै पठनीय, संग्रहणीय र स्तरीय बनाउने कृतसंकल्प गर्दै पत्रिकामार्फत सद्‌गुरुदेवहरूको चिन्तन विस्तार गर्न र जन-जनमा आध्यात्मिक ज्ञानको प्रकाश फैलाउन यस पत्रिकाको ग्राहक विस्तार योजनामा भाग लिई अक्षय पुण्य आर्जन गर्नका लागि सम्पूर्ण साधक साधिका, कार्यकर्ता र जिज्ञासु महानुभावहरूमा हार्दिक अनुरोध गर्दछौँ । पत्रिका विस्तारका लागि आवश्यक रसिदका लागि संस्थाको पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग, नजिकका सम्पर्क कार्यालय एवं आरती संचालन केन्द्रहरूमा सम्पर्क राख्नुहुन पनि सूचित गरिन्छ ।

**सिद्धाश्रम शक्ति केन्द्र**

पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग

फोन नं २१००१५३, ०१६२२५१७७

## कविता

# गोरख निखिल हाम्रो घरमा

नाच्दै, गाउँदै बास बस्न आउनुभयो
गोरख-निखिल हाम्रो घरमा,
सुख, शान्तिको अनुभव हुन थाल्यो
भक्ति भाव बढ्न थाल्यो ।

गोरख-निखिल नाम जप्दै
यो संसारबाट बिदा लिन पाऊँ,
सधैं-सधैं तिम्रो चरणमा
बास बस्न पाऊँ ।

भाव छैन, भक्ति छैन, केही जान्दिन
जे जानेकी छु त्यही गर्छु खुशी हुनुहोला,
गोरख निखिल तिम्रो धाममा आउन मनलाग्छ
कहाँबाट आउने हो बाटो देखाइदेऊ न ।

भूल भए क्षमा, रक्षा गर गोरख-निखिल
जे जानेकी छु, त्यही गर्छु ज्ञान देऊ न,
ज्ञान छैन, भक्ति छैन शिक्षा देऊ न
ज्योतिपुञ्ज गोरख निखिल हाम्रो घरमा
फेरि फेरि बास बस्न आउनुहोला

–बनु श्रेष्ठ
शक्तिचोक, गोरखा

आध्यात्मिक शक्ति अनुसन्धान संस्था सिद्धाश्रम शक्ति केन्द्रसम्बन्धी कुनै जानकारी वा यसका विविध कार्यक्रमहरूको बारेमा जानकारी चाहिएमा यस केन्द्रको प्रजापति लेप्र युनिटमा पत्राचार गर्नुहुन अनुरोध छ ।

पत्राचारका लागि लागि ठेगाना :
प्रजापति लेप्र युनिट
सिद्धाश्रम शक्ति केन्द्र
पो.ब.नं. १०५११, बसुन्धरा, काठमाडौँ

## आश्विन महिनाका चाडपर्व

| | |
|---|---|
| आश्विन १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**, विश्वकर्मा पूजा |
| आश्विन २ गते | **तान्त्रोक्त बगलामुखी हवन** |
| आश्विन ५ गते | **दिव्य गुरु महोत्सव** |
| आश्विन ६ गते | **श्री शिव गोरक्ष हवन**, अष्टमीव्रत, गोरखकाली पूजा |
| आश्विन ७ गते | **तान्त्रोक्त बटुक भैरव हवन**, मातृ नवमी |
| आश्विन ९ गते | इन्दिरा एकादशी व्रत |
| आश्विन १० गते | प्रदोष व्रत |
| आश्विन १३ गते | सोमबारे औँसी |
| आश्विन १४ गते | घटस्थापना, शारदीय नवरात्रि प्रारम्भ |
| आश्विन १६ गते | ईद-उल-फित्र (इद) |
| आश्विन १८ गते | ललिता पंचमी (उपाङ्ग ललिताव्रत) |
| आश्विन २० गते | महासरस्वती पूजन, फूलपाती |
| आश्विन २१ गते | महाअष्टमी व्रत, गोरखकाली पूजा |
| आश्विन २२ गते | महानवमी व्रत |
| आश्विन २३ गते | विजयादशमी पूजन, दशैंको टीका |
| आश्विन २४ गते | पापाङ्कुशा एकादशी व्रत |
| आश्विन २६ गते | प्रदोष व्रत |
| आश्विन २८ गते | शरद पूर्णिमा (कोजाग्रत), कार्तिकस्नान एवं आकाशदीपदानारम्भ |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**



## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

# गरिबी, अन्याय, अत्याचार, भ्रष्टाचार, अशिक्षा, जातीय भेदभाव हाम्रा शत्रु हुन् । यसका विरुद्ध सबै सचेत, सजग र क्रियाशील रहनु पर्दछ ।

## मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी नेपालकै पहिलो रेडियो कार्यक्रम

# गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| काठमाडौँ | सोमबार बिहान ७:००–८:०० | रेडियो सिटी एफ एम | ९८.८ |
| पोखरा | सोमबार बिहान ५:०५–५:४५ | माछापुच्छ्रे एफ एम | ९१ |
| चितवन | सोमबार बिहान ५:००–५:४० | कालिका एफ एम | ९५.२ |
| बनेपा | सोमबार बिहान ६:००–६:३० | मध्यपूर्व एफ एम | १०४ |
| सुर्खेत | सोमबार बिहान ५:१५–५:४५ | रेडियो भेरी एफ एम | ९८.६ |
| प्युठान | सोमबार बिहान ५:३०–६:०० | माण्डवी एफ एम | ९७ |
| गोरखा | सोमबार बिहान ५:३०–६:०० | रेडियो गोरखा एफ एम | ९२.८ |
| भैरहवा | बिहीबार बिहान ५:००–५:४५ | रूपन्देही एफ एम | १०२ |
| दाङ घोराही | बिहीबार बिहान ५:३०–६:०० | रेडियो मध्यपश्चिम एफ एम | ९१.४ |
| पाल्पा | बिहीबार बिहान ५:००–५:३० | रेडियो मुक्तिनाथ एफ एम | ९०.८ |
| सिन्धुली | बिहीबार बिहान ५:००–५:३० | सिन्धुलीगढी एफ एम | १०३.६ |
| दाङ लमही | शुक्रबार बिहान ५:३०–६:०० | रेडियो देउखुरी एफ एम | १०५.८ |
| पोखरा | बिहीबार बिहान ५:३०–६:०० | रेडियो सराङ्कोट एफ एम | १०४.६ |
| दमौली | बिहीबार बिहान ५:२५–५:५५ | दमौली एफ एम | ९४.२ |
| कोहलपुर | बिहीबार बिहान ५:३०–६:०० | कोहलपुर एफ एम | १००.२ |

## हार्दिक श्रद्धाञ्जली

जन्मः
वि.सं. १९८४
भाद्र शुक्ल तृतिया

स्वर्गारोहण
वि.सं. २०६५
असारकृष्ण दशमी

हाम्रा श्रद्धेय टंकबहादुर सिजापतीको ४५ औं दिनको पुण्यतिथिको अवसरमा उहाँको आत्मालाई चिर शान्ति प्राप्त होस् भनेर श्री सद्गुरुदेवहरूसँग प्रार्थना गर्दछौं ।

**पत्नी : कान्छी सिजापती**

छोरा/बुहारीः जनार्दन/पुनम सिजापती
छोरी/ज्वाइँः रामकुमारी खड्का
मधुकुमारी /दिपक रायमाझी
ललिता/हरिशरण के.सी.
शान्ति/प्रकाश बस्नेत

## हार्दिक श्रद्धाञ्जली

जन्मः
वि.सं. १९९४ साल

स्वर्गारोहण
वि.सं. २०६४ साल
महानवमी

हाम्रा श्रद्धेय रामराज चालिसेको वार्षिक पुण्यतिथिको अवसरमा उहाँको आत्मालाई चिर शान्ति प्राप्त होस् भनेर परमपूज्य सद्गुरुदेवहरूसँग प्रार्थना गर्दछौं ।

**पत्नी : उर्मिला चालिसे**

छोरा/बुहारीः राजेश/अर्चना चालिसे, राजन चालिसे

छोरी/ज्वाइँः रेखा अधिकारी/सुमन अधिकारी

नाति/नातिनीः सार्थक अधिकारी/प्राप्ति चालिसे

# दुर्गा पूजन

नवरात्रि साधना पर्व हो र हरेक साधकले नवरात्रिमा दुर्गाको यो पूजन विधान अवश्य नै गर्नुपर्दछ। नित्य दुर्गा सप्तशतीको पाठ अथवा त्यसका केही श्लोक, मन्त्रहरूको पाठ पनि अवश्य गर्नुपर्दछ।

प्रात: ब्रह्ममुहूर्तमा उठेर स्नान गर्नुअगाडि कुनै पात्रमा गंगाजल वा अन्य कुनै तीर्थको जल लिएर निम्न मन्त्रको उच्चारणसँगै तीर्थहरूलाई आह्वान गर्नुहोस्।

**ॐ गंगे च यमुने चैव गोदावरि सरस्वति।**
**नर्मदे सिन्धु कावेरि जलैस्मिन्सन्निधिं कुरु॥**

अब उक्त जललाई स्नान गर्ने जलमा मिसाएर स्नान गर्नुहोस्। स्नानपश्चात् निम्न मन्त्र उच्चारण गर्दै भगवान् सूर्यदेवलाई अर्घ्य दिनुहोस्।

**ॐ सूर्यसहस्रांशो तेजोराशेः जगत्पते।**
**अनुकम्पय मां देव गृहाणार्घ्यं नमोऽस्तु ते॥**

यसपछि शुद्ध वस्त्र धारण गरेर आफ्नो पूजन कक्षमा प्रवेश गर्नुहोस्, पूजनको लागि आवश्यक सम्पूर्ण सामग्री तयार गर्नुहोस्। अब उत्तर अथवा पूर्व दिशातर्फ फर्केर आसनमा बस्नुहोस् र धूप, दीप बाल्नुहोस्।

साधना सामग्री– नवदुर्गा यन्त्र तथा नवदुर्गा माला

**पवित्रीकरण–**

अब निम्न मन्त्र उच्चारण गर्दै पवित्रीकरणको लागि पञ्चपात्रको जल सबैतिर छर्कनुहोस्।

**ॐ अपवित्रः पवित्रो वा सर्वावस्थां गतोऽपि वा।**
**यः स्मरेत्पुण्डरीकाक्षं स बाह्याभ्यन्तरः शुचिः॥**

**भूमि पूजन–**

आफ्नो आसनमुनि दायाँपट्टि अबीरले त्रिकोण बनाएर त्यसमा चन्दन, अक्षता, फूलले पूजन गरी हात जोड्दै निम्न मन्त्र उच्चारण गर्नुहोस्।

**ॐ ह्रीं आधारशक्त्यै नमः, ॐ पृथिव्यै नमः, ॐ अनन्तासनाय नमः, ॐ विमलासनाय नमः, ॐ पद्मासनाय नमः।**

अब हात जोडेर साधना सफलताको लागि पृथ्वी मातासँग प्रार्थना गर्नुहोस्।

**ॐ पृथिव त्वया धृता लोका देवि ! त्वां विष्णुना धृता।**
**त्वं च धारय मां देवि पवित्रं कुरु चासनम्॥**

**भूतोपसारण–**

देब्रे हातमा जल लिएर निम्न मन्त्र उच्चारण गर्दै दाहिने हातले दशै दिशामा जल छर्किनुहोस्।

**अपक्रामन्तु भूतानि पिशाचाः प्रेतगुह्यकाः।**
**ये चात्र निवसन्त्यन्या देवता भुवि संस्थिता॥**
**अपसर्पन्तु ते भूता ये भूता भुवि संस्थिताः**
**ये भूता विघ्नकर्तारस्ते नश्यन्तु शिवाज्ञया॥**

**संकल्प–**

दाहिने हातमा जल लिएर निम्न संकल्प मन्त्रको उच्चारण गर्नुहोस्।

ॐ **विष्णुर्विष्णुर्विष्णुः अमुक** (महिनाको नाम) **मासे, अमुक** (पक्षको नाम) **पक्षे, अमुक** (दिनको नाम) **दिवसे, अमुक** (आफ्नो गोत्र) **गोत्रः, अमुक** (आफ्नो नाम) **शर्माऽहं सकलपरिवारस्यायुरारोग्यसम्पद्विवृद्धचर्थं पुत्र पौत्रादिसमृद्धचर्थं सर्वेप्सितसिद्धचर्थं धनधान्यसमृद्धचर्थं सकल मनोरथप्राप्त्यर्थमाधिदैविकाधिभौतिकाध्यात्मिकत्रिविधतापोपशामनार्थं, श्री महाकाली महालक्ष्मी महासरस्वती प्रीत्यर्थं नवरात्रि पूजनं अहं करिस्ये।**

अब जललाई भुइँमा छोडिदिनुहोस्।

**विनियोगः–**

अब हातमा जल लिएर निम्न मन्त्रसहित विनियोग गर्नुहोस्।

**अस्य देवीकलामातृकान्यासस्य प्रजापतिर्ऋषिर्गायत्रीछंद- श्रीमातृकाशरददेवता हलो बीजानि स्वराः शक्तयः अमुकमंत्रांगत्वेन मातृकान्यासे विनियोगः। षडंगन्यासः ॐप्रजापतिर्ऋषये नमः शिरसि। गायत्रीछन्दसे नमो मुखे शारदादेवतायै नमो हृदि हल्बीजेभ्यो नमो गुह्य, स्वरशक्तये नमः पादयोः, विनियोगाय नमः सर्वांगे।**

**करन्यास–**

अब निम्न मन्त्रद्वारा करन्यास गर्नुहोस्।

**ॐ अं ॐ आं हृदयाय नमः, ॐ इं ॐ ईं शिरसे स्वाहा ॐ उं ॐ ऊं शिखायै वषट्, ॐ एं ॐ ऐं कवचाय हुम्, ॐ ओं ॐ औं नेत्रत्रयाय वौषट् ॐ अं ॐ अः अस्त्राय फट्।**

आफ्नो दाहिनेतिर चामलको थुप्रोमाथि शंख स्थापना गर्नुहोस्। अब शंखलाई स्नान गराउनुहोस्, टीका लगाइदिनुहोस् र धूप, दीपसहित पूजन गर्नुहोस्। पूजनपश्चात् निम्न मन्त्र उच्चारण गर्दै शक्तिलाई आह्वान गर्नुहोस्।

**ॐ शंखादौ चन्द्रदैवत्यं कुक्षौ वरुणदेवता।**
**पृष्ठे प्रजापतिश्चैवमग्रे गंगा सरस्वती॥**
**त्रैलोक्ये यानि तीर्थानि वासुदेवस्य चाज्ञया।**
**शंखे तिष्ठन्ति विप्रेन्द्र तस्माच्छंखं प्रपूजयेत्॥**

आह्वानपश्चात् दुवै हात जोडेर निम्न मन्त्र उच्चारण गर्नुहोस्।

**ॐ त्वं पुरा सागरराज्जातो विष्णुना विधृतः करे।**
**निर्मितः सर्वदेवैश्च पाञ्चजन्य नमोस्तु ते॥**

**कलश पूजन–**

आफ्नो दाहिनेतिर चामलले स्वस्तिक चिह्न बनाएर त्यसमाथि माटो,

तामा अथवा पित्तलको कलश स्थापना गर्नुहोस् र त्यसमा जल भर्नुहोस् । कलशमा अबीर, अक्षता, फूल, द्रव्य र दूबोले पूजन गरी एउटा सुपारी तथा पाँचवटा पीपलको पात राख्नुहोस् । अब पञ्चरंगी धागो बेरिएको नरिवल त्यस कलशमाथि स्थापित गर्नुहोस् र कलशलाई स्नान गराउनुहोस् । अब कलशलाई पञ्चरङ्गी धागोले बाँधेर कलशको चारैतर्फ अबीरको टीका लगाइदिनुहोस् । यसपछि अक्षता, फूल, धूप, दीप, नैवेद्यबाट कलशको पूजन गरेर दुवै हातले कलशलाई छोइराख्नुहोस् र निम्न मन्त्र उच्चारण गर्नुहोस् ।

**कलशस्य मुखे विष्णुः कण्ठे रुद्रः समाश्रितः,**
**मूले तत्र स्थितो ब्रह्मामध्ये मात्रिगणः स्थिताः**
**कुक्षौतु सागरा सर्वे सप्त द्वीपा वसुन्धरा ।**
**ऋग्वेदोऽथ यजुर्वेदः सामवेदोऽथर्वणः ।**
**अंगैश्च सरिता सर्वे कलशं तु समाश्रिता ।**
**अत्र गायत्री सावित्री शान्तिः पुष्टि करस्तथा ।**
**आयान्तु यजमानस्य दुरित क्षय कारकाः ।**

अब कुनै थालीमा नवदुर्गा यन्त्र स्थापना गर्नुहोस् ।

**ध्यान–**

निम्न मन्त्रसहित भगवती जगदम्बाको ध्यान गर्नुहोस् ।

**दुर्गे स्मृता हरसि भीतिमशेष जन्तोः**
**स्वस्थैः स्मृता मतिमतीव शुभांददासि ।**
**दारिद्र्य दुःख भयहारिणी का त्वदन्या**
**सर्वोपकार करणाय सदार्द्र चित्ता ।**

**आवाहन–**

निम्न मन्त्र उच्चारण गर्दै भगवतीलाई आह्वान गर्नुहोस् ।

**एह्योहि भगवत्यम्ब शिवलोकात्सनातने ।**
**गृहाण मम पूजां च शारदीयां सुरेश्वरि ।**
**दुर्गे देवि इहागच्छ सान्निध्यमपि कल्पय ।**
**पूजाभागान्गृहाण त्वं योगिनीकोटिझि सह ॥**

**आसन–**

भगवतीलाई आसनको लागि निम्न मन्त्र उच्चारण गर्दै फूल चढाउनुहोस् ।

**अमूल्यरत्ननिर्माणं नानाचित्रविराजितम् ।**
**वरं सिंहासनं श्रेष्ठं गृह्यतां शंकरप्रिये ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः आसनं समर्पयामि ।**

**पाद्य–**

अब निम्न मन्त्रसहित शुद्ध जल चढाउनुहोस् ।

**अमूल्यरत्नपात्रस्थं निर्मलं जाह्नवीजलम् ।**
**पादप्रक्षालनार्थाय दुर्गे पाद्यं च गृह्यताम् ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः पाद्यं समर्पयामि ।**

**आचमन–**

मुखशुद्धिको लागि तीन आचमनी जल अर्पण गर्नुहोस् ।

**ॐ देवानामपि वेद्यायै देवानां देवतात्मने ।**
**आचमनं कल्पयामीशि शुद्धानां शुद्धिहेतवे ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः आचमनं समर्पयामि ।**

**मधुपर्क–**

मह, घिउ तथा दही मिसाएर भगवतीलाई मधुपर्क अर्पण गर्नुहोस् ।

**ॐ सर्वकालुष्यहीनायै परिपूर्णसुखात्मने ।**
**मधुपर्कं मिमं देवि कल्पयामि प्रसीद मे ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः मधुपर्कं समर्पयामि ।**

**अर्घ्य–**

दाहिने हातमा जल लिएर त्यसमा अबीर, फूलसहित निम्न मन्त्रद्वारा अर्घ्य दिनुहोस् ।

**ॐ तापत्रयहरं दिव्यं परमानन्दलक्षणम् ।**
**तापत्रयविनिर्मुक्तस्तवार्घ्यं कल्पयाम्यहम् ॥**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः इदमर्घ्यं समर्पयामि ।**

**वस्त्र–**

निम्न मन्त्र पढ्दै भगवती जगदम्बालाई वस्त्र अर्पित गर्नुहोस् ।

**ॐ माया चित्रपटच्छन्ननिजगुह्येपतेजसे ।**
**निवारणाय विज्ञानवासस्ते कल्पयाम्यहम् ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः ।**

**उत्तरीयदान–**

निम्न मन्त्र उच्चारण गर्दै मातालाई उत्तरीय वस्त्र समर्पित गर्नुहोस् ।

**ॐ यामाश्रित्य महादेवो जगत्संहारकस्सदा ।**
**तस्यै ते परमेशान्यै कल्पयाम्युत्तरीयकम् ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः इदमुत्तरीयं समर्पयामि ।**

**आभूषणदान–**

मातालाई आभूषण अर्पण गर्नुहोस् ।

**ॐ स्वभावसुन्दरांगायै नानाशक्त्याश्रिते शिवे ।**
**भूषणानि विचित्राणि कल्पयाम्यरार्चिते ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः भूषणं समर्पयामि ।**

**गन्धदान–**

मातालाई चन्दन अर्पण गर्नुहोस् ।

**ॐ चन्दनागुरुकस्तूर्यः कुंकुम रोचनं तथा ।**
**कर्पूरादिसुगन्धाढ्यं सर्वांगेषु विलेपयेत् ॥**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः चन्दनं समर्पयामि ।**

**अक्षतदान–**

मातालाई अक्षता चढाउनुहोस् ।

**ॐ अक्षतास्तण्डुलांश्चैव कुंकुमाक्तान्मनोहरान् ।**
**गृहाण त्वं महादुर्गे सर्वसिद्धिप्रदा भव ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः अक्षतान् समर्पयामि ।**

**पुष्पदान–**

मातालाई निम्न मन्त्रसहित फूल चढाउनुहोस् ।

**तुरीयवनसम्भूतं नानागुणमनोहरम् ।**
**अमन्दसौरभं पुष्पं गृह्यतामिदमुत्तमम् ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः पुष्पं समर्पयामि ।**

**बिल्वपत्रदान–**

मातालाई बेलपत्र चढाउनुहोस् ।

**अमृतोद्भववृक्षोत्यं शंकरस्य सदा प्रियम् ।**
**बिल्वपत्रं प्रयच्छामि पवित्रं ते सुरेश्वरि ।**
**ॐ भूर्भुवः स्वः श्री दुर्गायै नमः बिल्वपत्रं समर्पयामि ।**

**धूप–**

निम्न मन्त्रसहित मातालाई धूप देखाइदिनुहोस् ।

**ॐ दशांगं गुग्गुलुं धूपं चन्दनागुरुसंयुतम् ।**
**सर्वेषामुत्तमं धूपं श्रीदुर्गायैनिवेदयेत् ।**
**ॐ भूर्भुवः स्वः सांगायै सपरिवारायै सवाहनायै सायुधायै श्रीदुर्गादेव्यै नमः धूपं समर्पयामि ।**

**दीपदान–**

निम्न मन्त्रसहित मातालाई दीयो देखाइदिनुहोस् ।

**ॐ घृताद्यैर्वर्तितश्चैव महातेजोमयो ज्वलन् ।**
**महान्तमन्धकारं च निवारयति भूतले ।**
**ॐ भूर्भुवः स्वः सांगायै सपरिवारायै सवाहनायै सायुधायै श्रीदुर्गादेव्यै नमो दीपं समर्पयामि ।**

**नैवेद्यदान–**

अब मातालाई नैवेद्य चढाउनुहोस् ।

**नानाविधानि भक्ष्याणि व्यंजनानि हरप्रिये ।**
**यथेष्ठं भुंक्ष्व नैवेद्यं षड्रसं च चतुर्विधम् ॥**
**रंभादाडिम द्राक्षादीन् नानाऋतुफलानि च ।**
**भक्षयम्ब मया दत्तं कैवल्यफलदायिनि ॥**
**ॐ भूर्भुवः स्वः सांगायै सपरिवारायै सवाहनायै सायुधायै श्रीदुर्गादेव्यै नमः इदं नैवेद्यं गृहाण स्वाहा ।**

**आचमन–**

मातालाई आचमनको लागि जल चढाउनुहोस् ।

**उच्छिष्टोप्यशुचिर्वापि यस्याः स्मरणमात्रतः ।**
**शुद्धिमाप्नोति तस्यै ते पुनराचमनीयकम् ॥**
**ॐ भूर्भुवः स्वः सांगायै सपरिवारायै सवाहनायै सायुधायै श्रीदुर्गायै नमः आचमनं समर्पयामि ।**

**ताम्बूलदान–**

मातालाई पान, मसला आदि अर्पण गर्नुहोस् ।

**कपूरैर्नागवल्लीझि ऋमकादिभिरन्वितम् ।**
**शिववक्षोनिवासायै ताम्बूलं च समर्पये ॥**
**ॐ भूर्भुवः स्वः श्रीदुर्गायै नमः ताम्बूलं समर्पयामि ।**

**फलदान–**

मातालाई फल चढाउनुहोस् ।

**फलैश्च पुरनारंगै कदलीमधुरैस्तथा ।**
**नारिकेल समायुक्तं फलं च प्रतिगृह्यताम् ॥**
**ॐ भूर्भुवः स्वः श्रीदुर्गायै नमः फलं समर्पयामि ।**

**दक्षिणादान–**

मातालाई दक्षिणा अर्पित गर्नुहोस् ।

**हिरण्यगर्भगर्भस्थं हेमबीजं विभावसोः ।**
**अनन्तपुण्यफलदमतः शांति प्रयच्छ मे ॥**
**ॐ भूर्भुवः स्वः श्रीदुर्गायै नमः दक्षिणां समर्पयामि ।**

**नीराजन–**

नीराजनको लागि धूप, दीपसहित आरती गर्नुहोस् ।

**प्रदक्षिणा–**

**ॐ यानि कानि च पापानि जन्मान्तरकृतानि वै ।**
**तानि सर्वाणि पश्यन्तु प्रदक्षिणपदेपदे ॥**

**प्रणाम–**

निम्न मन्त्र उच्चारणसहित मातालाई प्रणाम गर्नुहोस् ।

**प्रपन्नं पाहि मामीशे भीतं मृत्युमहार्णवात् इति वदन् साष्टांगं प्रणमेत् ।**

**पुष्पाञ्जली–**

अब निम्न मन्त्रद्वारा पुष्पाञ्जली गर्नुहोस् ।

**नानासुगन्धयुक्तं त यथाकालोद्भवन्तया ।**
**मया पुष्पांजलिं दत्तं गृहाण परमेश्वरि ॥**

**मन्त्र जप–**

यसपछि उपरोक्त मालाले निम्न मन्त्रको नवरात्रिभर नित्य पाँच माला जप गर्नुहोस् ।

**॥ ॐ दुं दुर्गायै सौभाग्यसिद्धिं दुं ॐ फट् ॥**

**क्षमा प्रार्थना–**

अब भगवती दुर्गासँग प्रार्थना गर्दै आफ्नो जीवनमा भएका अपराधहरूको लागि क्षमा प्रार्थना गर्नुहोस् ।

**ज्ञानतोऽज्ञानतो वाथ यन्मया क्रियते शिवे ।**
**मम कृत्यमिदं सर्वमिति देवि क्षमस्व मे ॥ १ ॥**
**अपराधसहस्राणि क्रियन्तेऽहनिशं मया ।**
**दासोयमिति मां मत्वा क्षमस्व परमेश्वरि ॥२॥**
**अपराधो भवत्येव सेवकस्य पदे पदे ।**
**कोऽपरः सहतां लोके केवलं स्वामिनंविना ॥३॥**

यसप्रकारले यो पूजन विधान नित्य गर्नुपर्ने हुन्छ । यदि कुनै कारणवश नित्य पूजन गर्न सकिएन भने प्रथम दिन पूजन अवश्य गर्नुपर्दछ र मालाले मन्त्र जप चाहिँ सधैं गर्नुपर्दछ । नवरात्रिको यस साधनामा कलश त्यही स्थानमा स्थापित रहन दिनुहोस् र विजयादशमीको दिन सामग्री आफ्नो पूजा स्थानमा नै रहन दिनुहोस् तथा जललाई कुनै वृक्षमा अथवा सरोवरमा प्रवाहित गरिदिनुहोस् ।

जय गुरुदेव !

हाम्रो संस्कार र सभ्यता नै संस्कृतिमा प्रतिविम्बित भएको हुन्छ। बौद्धिक मन्थनबाट संस्कार प्रतिपादित हुने हो। यही संस्कार हाम्रो दैनिकी (Daily Routine) मा परम्परा हुन पुग्छ। परम्परागतरूपमा अनुकरण हुँदै आएको हाम्रो आध्यात्मिक संस्कारको राष्ट्रले अपनाएको संस्कृतिसँग घनिष्ट सम्बन्ध रहेको हुन्छ। देश र देशबासीहरूको रक्षाखातिर देवदेवी वा शक्तिको आराधनाका साथै प्रतिमूर्ति स्थापना गर्ने परम्परा किराँतकालदेखि नै प्रारम्भ भइसकेको थियो। राजा गुणकामदेवले खड्गाकारमा कान्तिपुर शहरी राज्य स्थापना गर्दा शहर तथा शहरबासीहरूको रक्षाकै लागि चारैतिर स्थापना गरेको तीनधारा पाठशालानिर फसक्व वा पासिक्व अजीमा (ब्रह्मायणी), टुँडिखेल शहिदगेटपूर्व लुँमरी अजीमा (रुद्रायणी), आर्मी हेडक्वार्टरबाट थापाथली, माइतीघर जाने बाटोछेउमा फिब्ब अजीमा (कुमारी), टेकु पचली भैरवनिर नै अजीमा (वैष्णवी), विष्णुमती नदीको पूर्वी किनारमा कङ्ग अजीमा (कङ्केश्वरी), क्षेत्रपाटी ढल्कोमा लुँति अजीमा (इन्द्रायणी), ठमेल गल्कोपाखामा थँवहि अजीमा (चामुण्डा) र नारायणहिटी संग्रहालयभित्र पूर्वोत्तर कुनामा बसिक्व वा चन्द्रलखु अजीमा (महालक्ष्मी) गरी जम्मा आठ अजीमाहरू (मौलिक शक्तिपीठ) अद्यावधि आराध्य नै छन्। भद्रकाली, कंकेश्वरी तथा इन्द्रायणी आदि पछि गएर चामुण्डा मातृगण स्वरूपमा समेत पूजिन थाले। कान्तिपुर कोलियग्राम र दक्षिण कोलियग्राम रहँदा भित्री शहर (असन, कमलाक्षी, ज्याठा, वटु, केल, कीलागल, नरदेवी, टेंगल) मा पनि असँ भुलु (अन्नपूर्णादेवी, असन), लुँचु भुलु (केलटोल), अजा भुलु (वटुटोल), लंका भुलु (किलागल), न्यत भुलु (श्वेतकाली, नरदेवी), भिं भुलु (ज्याठा), सुं भुलु (कमलाक्षी) तथा कुलाँ भुलु (रक्तकाली टेंगल) गरी आठै अजीमाहरू स्थापित भएका थिए। शक्ति आराधनामा ललितपुर वा पाटनमा दशमहाविद्या, भक्तपुरमा नवदुर्गा भवानीको बाहुल्यता रहेझैं कान्तिपुर वा काठमाडौं अजीमाप्रधान रहेको छ।

काठमाडौंबासीको जनजिब्रोले अजीमा भनिने राजा गुणकामदेवले स्थापना गरेका आठ तथा कोलियग्रामका रक्तकालीसमेत आठ देवीहरू षड्भुजासहित टुक्रुक्क बसेकी, पेट धसिएकी, हाडछाला मात्र भएकी,

निधार तथा गालाको हाडसमेत उठेको देखिने गरी दुब्लाएको आकृतिका अष्टमातृकाभित्रका चामुण्डा स्वरूप मानिआएको छ । यी चामुण्डा स्वरूपा अजीमाहरूको ढाल, खड्ग, त्रिशूल, डमरु, छेदन गरिएको नरशिर आदि आयुध र आसनमा भिन्नता रहेको छ । अन्नपूर्णादिवीको आसन श्वेतनाग हो भने श्वेतकाली नरदेवीको आसन पञ्च खप्पर तथा रक्तकाली तीनहात खुट्टा टेकी एक हातमा पात्र लिएकी दुई नरको पीठमा आरूढ छिन्। वृहन्नीलतन्त्रमा कालीका दुई भेद कृष्णाका नामले दक्षिणा र सुन्दरीलाई रक्तवर्णा रूपले अधिष्ठित भनेर उल्लेख गरिएको छ । तर यी चामुण्डा अजीमाहरूमा रक्तकाली र दशमहाविद्यामा रक्तकालीको नामबाट पनि सम्बोधित त्रिपुरासुन्दरी षोडशी दुई भिन्न देवी भएको कुरा तन्त्रविज्ञ प्रा. विद्यानाथ भट्ट बताउनु हुन्छ । हाडछाला मात्र भएकी दुब्ली वृद्धा अजीमा मध्यराततिर रक्तकाली देवीस्थान वरिपरि बढारिरहनु भएको, कहिले टहलिरहनु भएको अवस्थामा देखिने स्थानीय बूढापाकाहरू बताउँछन् । तान्त्रिक देवीको रूपमा पूजिने रक्तकाली माताको सुनको मोलम्बायुक्त ढलौटको मूर्ति वर्षको दुईपटक दशैंको नवमी र रामनवमीका दिन मन्दिरमा ल्याइन्छ । स्थानीय बासिन्दाहरू मन्दिरभित्र रहेको द्रौपदीको मूर्तिमा भाकलसहित 'किसली' (एउटा माटोको पालामा चामल, सानो सिंगो सुपारी र पैसा) राखी पूजा गरे विवाह हुन नसकेकाहरूको तुरन्त विवाह हुने विश्वास गर्दछन् ।

नेवारीमा बजैलाई 'अजी' र आमालाई 'मा' भन्दा अजीमाको अर्थ (भाव) आमाहरूकी पनि आमा हुन्छ । हाल भित्री शहरमा पर्न आएका यी भुलु (गोप्य तान्त्रिक अजीमा) हरूमध्ये क्षेत्रपाटी दक्षिण, नरदेवी उत्तर टेंगल (टेङ घः) टोलको दोबाटोबाट पश्चिम विष्णुमती नदी जाने बाटोको केही दूरीमा बाटो छेउमै कुलाँ भुलु (रक्तकाली) को मन्दिर रहेको छ । 'सूर्यवंशी राजा श्री गुणकामदेवलाई ओं श्री महालक्ष्मीबाट स्वप्नवाणी भए बमोजिम कलिगत ३८२५ मा कान्तिपुर शहर बनाइसकेपछि देशको रक्षाखातिर तंत्रोक्तरूपमा रक्तकाली आह्वान गरी जगाई स्थापना गरेका हुन्' भनी माता रक्तकालीको सम्बन्धमा देवमाला वंशावली'मा लेखिएको छ । मल्लकालको अन्तसम्ममा कायमै रहेको शहरी राज्यको उत्तर-पश्चिम सीमान्तमा यस मन्दिर प्रतिस्थापित छ । अजीमाका स्थानहरूमा प्रवेशद्वार वा स्थान सामुन्ने दायाँबायाँ गणहरूको बीचमा मूल अजीमाको मूर्ति प्रतिस्थापना हुने क्रममा रक्तकाली मन्दिरको गर्भगृहमा आफ्ना गणसहित देवी अजीमाको मूर्ति उत्तर-पश्चिम कुनामा स्थापित छ । काठमाडौंको नेवारी परम्परानुसार भाद्र शुक्ल द्वादशीका दिन दिवंगत भएका व्यक्तिको घर-परिवारका सदस्यहरू मृतकको आत्मशान्तिका लागि धूपबत्ती बाली नगरको बाहिरी क्षेत्रका (शहरी राज्य व्यवस्थामा नगरको सीमाना वरिपरि सुरक्षाका अरु व्यवस्थासहित ठूलठूला पर्खाल बनाइएका थिए) देवदेवी, पीठहरू परिक्रमा गर्दा (उपाकु उलेगु) सीमानामा अवस्थित रक्तकाली मन्दिरको स्वभावतः प्रदक्षिणा गर्ने परम्परा अद्यावधि कायम रहेकै छ ।

यी अजीमाहरू कुनै मन्दिरभित्र प्रतिस्थापित नभई अगाडि खाली गरी तीनतिर मान्छेको उचाईमा बनाइएको पर्खालमध्ये दायाँ बायाँबाट बीचमा चुलिँदै गएको मौलिक स्थापत्यस्वरूप पार्श्व पर्खालको फेदमा गणसहितका अमूर्त ढुङ्गाहरू देवीतुल्य स्थापना गरेको हुन्थ्यो । यस्तो अजीमास्थान खरीको बोट छेउछाउ स्थापित गरिएको बुझिन्छ । यसै धारणानुरूप रक्तकाली मन्दिरसँगै केही वर्ष अगाडिसम्म ठडिएको मक्किसकेको ठूलो रुखको अवशेष मात्र रहेको छ । गुणकामदेवले स्थापना गरेका अजीमाहरूमध्ये कंकेश्वरी र इन्द्रायणीबाहेक अन्य अजीमाहरू अद्यावधि मौलिक स्थापत्य स्वरूपमा रहेका छन् । अजीमाका मन्दिरहरूमा पनि पूर्व स्थापत्य स्वरूपलाई नै भित्र पारी बनाइएका हुन् । गणसहित देवीतुल्य स्थापित अमूर्त ढुङ्गाहरूको अगाडि खड्गअंकित शिला वा धातुका स्तम्भ ठड्याइएका हुन्छन् । रक्तकाली मन्दिर बनाउने क्रममा जग राख्नको लागि देवीको अगाडि ठड्याइएको खड्गअंकित शिलास्तम्भ उखेली मन्दिरको ढोका अगाडि अद्यावधि रूपमा राख्नुपूर्व परामर्श तथा इजाजत दिएका पूजारीको दायाँ हात काँपेको काप्यै भयो र उनको ६ महिना नबित्दै मृत्यु भएको कुरा विष्णु कर्माचार्य (पुर्ख्यौली पूजारी) सुनाउनु हुन्छ । यी अजीमाहरूका अमूर्त प्रतिमूर्तिहरू आयाताकार वा चौकोर खाल्डोमा स्थापना भए अनुरूप गणसहित माता रक्तकाली खाल्डोमा नै स्थापित छिन्। अपवादस्वरूप श्वेतकाली, नरदेवी दुई सिँढीको वेदीमाथि विराजमान छिन् ।

रक्तकालीका पूजारीले आफ्ना पिता पशुपति अमालकोटमा मुख्य कर्माचार्यको पदबाट अवकाश पाएपछि तत्कालीन प्रधानमन्त्री मोहन शम्शेरको प्रमाङ्गीबाट उहाँहरूकै आराध्यदेवी रक्तकालीको विक्रम संवत् २००७ पौष १९ गतेदेखि नित्य पूजा आरम्भ भएको थाहा भएको छ । वार्षिक पर्वकालमा अन्य अजीमाहरूको खटयात्रासहित नगर परिक्रमा गराएको पाइन्छ । तर रक्तकालीको जात्रा गरेको नपाइँदा देवीलाई पन्छाएको झैं लाग्छ । शारदीय दशैंको दशमीमा अन्य बही, बहाल तथा शक्तिपीठहरूबाट विजयोत्सवको प्रतीक खड्गजात्राको चलन रहेको छ । यसै चलनअनुसार कोथुननि (टेङ्गलको महादेव चोक) स्थित पूजारीको आगम घरबाट रक्तकालीको खड्गजात्रा निस्कँदा पाइलैपिच्छे नरबली दिनुपर्ने किंवदन्ती रहेको छ । टेङ्गल दोबाटोसँगै रहेको डबलीमा रक्तकालीको गणनाचमा पनि नरबली दिनुपर्ने भएकोले पछिल्ला पिँढीले उप्रान्त नाच ननचाउने गरी डबलीकै सडकछेउको कुनामा लत्ता-कपडा मुद्रा, माला, मुकुट, सामग्रीहरू जमिनमुनि गाडेर सतहमा शिलाचिह्न राखेको जनश्रुति पाइन्छ ।

स्थानीय बोलीमा कुलाँ भुलुको खाँटी नेवारी शाब्दिक अर्थ हुन्छ– रक्तिम क्षितिज (कुलाँ) वर्णकी प्रतिष्ठित देवी (भुलु वा अजीमा) । कुनै विशेष परिस्थितिमा घटस्थापना गरी स्थानको नामाकरण गरिने प्रथाअनुरूप टेङ टेङ बज्ने घडा (नेवारी शब्द 'घः') स्थापित स्थान भएको टेङ घः (टेङ्गल)

गरिन्छ। विवाह, व्रतबन्ध र नेवारीपरम्पराको गुठीपूजा (मृत्यु संस्कारमा संलग्न हुने सबै गुठियारहरूमिली संयुक्तरूपमा तान्त्रिक रूपमा गरिने पूजा विधि) समेत हुने यस देवीस्थानको जीर्णोद्धार सम्बन्धमा मन्दिरको मूलढोकाको दायाँ-बायाँ राखिएको सिंह शिलामूर्तिको ने.सं. ७९१ उल्लिखित पादपीठ अभिलेखमा राजा प्रताप मल्लको राज्यकालमा जीर्णोद्धार भएको देखिन्छ। त्यसैगरी राजा भाष्कर मल्लको पालामा पनि जीर्णोद्धारको कार्य भएको तथ्य मन्दिरको दायाँपट्टि रहेको ने.सं. ८३८ को सानो शिलालेखबाट थाहा हुन्छ। मन्दिर प्राङ्गणको पूर्वतिर रहेको पाटीको भित्तामा टाँसेको शिलापत्रअनुसार ने.सं. ९२५ मा पछिल्लो निर्माण कार्य भएको देखिन्छ। वि.सं १९९३ मा कुन-कुन कार्य भए, त्यसबारे केही पनि तथ्याङ्क नभेटिए पनि वि.सं. २०५८ मा पुरातत्त्व विभागले मन्दिरको जीर्णोद्धार गरेको थियो।[३] माता रक्तकाली परिसरको पुन: जीर्णोद्धार गर्न वि.सं २०६१ मा स्थापित 'रक्तकाली मन्दिर परिसर जीर्णोद्धार समिति'ले नमूनानुसार रु. १२ लाखको लागतमा जीर्णोद्धारको कार्य सम्पादन गर्ने सिलसिलामा मन्दिर परिसर प्रवेशका लागि पूर्व र उत्तरतिर कलात्मक द्वार निर्माण सम्पन्न गरिसकेको छ।

परिसरमा कुलाँ भुलु अजीमा रहनुभएको छ। यस्तै घडाहरू (घ:) सि घ: (श्रीघ: बिहार), नघल (नघ:), वं घ: (इन्द्रचोक): तथा न्हु घ: (जैशीदेवल) मा स्थापना गरिएका हुन्। यी घडाहरूमध्ये श्रीघ: बिहार, वं घ: (इन्द्रचोक): तथा न्हु घ: (जैशीदेवल) मा मात्र अद्यावधिक घडाहरू रहेका छन्। तन्त्रोपचारबाट कुनै पनि देवदेवी पूर्ण विधिको (अष्टमंगलयुक्त) घट (कलश) स्थापना गरी आह्वान गरिन्छ। कुनै पनि मन्दिरमा अझ पेगोडा शैलीको मन्दिरमा राखिने गजूरमा पनि अष्टमंगलमध्ये ६ साधनहरू प्रतिविम्बित भएको हुन्छ[२]। माता गुह्येश्वरी र अन्नपूर्णा देवीको पूजा आराधना कलश स्थापनाबाट गरिन्छ। कामरूप कामाक्षाबाट गुरु मच्छिन्द्रनाथलाई उपत्यका आगमन गराउँदा कलशमा राखेर ल्याइएको वर्णन पाइन्छ। माता रक्तकालीको विशेष अनुष्ठान गर्दा कलशको घडा (घ:) स्थापना भएको अनुमान गर्न सकिन्छ। वि.सं. १९९३ मा तत्कालीन श्री ६ को पदवी पाएका धर्माधिकारी बडागुरुजु हेमराजले पूरै मन्दिरलाई धातुले मोडेर सुनको मोलम्बायुक्त गजुर समेतको एक तले छाना तथा चौघेरा (चारैतिर) सत्तल जीर्णोद्धार गराउँदा टेङ घ: परिसर आफ्नो घर कम्पाउण्डभित्र पारेको स्पष्ट देखिन्छ। बडागुरुजुको घर कम्पाउण्डभित्र एउटा सुन्दर घरमा राखिएको टेङ घ: (घडा) हाल हराइसकेको अनुमान

जय गुरुदेव !

१. देवमाला (वंशावली) सम्पादक श्री योगी देवीनाथ, मृगस्थली गोरक्षपीठ, पेज ८५
२. पूजारी विष्णु कर्माचार्यको भनाइ।
३. रक्तकाली मन्दिर परिसर जिर्णोद्धार समितिको ब्रोसर (सूचनापत्र), गोरक्ष निखिल वाणी २०६२ आषाढ पृष्ठ ३२, ३३।

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।

# श्री गोरख महापुराण

## (उनन्चासौं भाग)

जसरी जल स्वभावैले स्वच्छ, ओसिलो, चिसो, मधुर र पवित्र हुन्छ तथा गंगा आदि तीर्थहरूको दर्शन र नाम उच्चारण गर्नाले मानिस पवित्र हुन्छन्, त्यसरी नै साधकले पनि पवित्रता अपनाएर पवित्र, पावन हुनुपर्छ । हे राजन् ! मैले अग्निसँग यो शिक्षा ग्रहण गरेँ कि जसरी अग्नि तेजस्वी र ज्योतिर्मय हुन्छ र कसैले पनि अग्निलाई आफ्नो तेजबाट दबाउन सक्दैन, अग्निले सबै कुरालाई आफैमा राख्छ तथा सबै कुरा खाएर पनि विभिन्न वस्तुको दोषहरूबाट मुक्त रहन्छ, त्यसमा लिप्त हुँदैन, त्यस्तै नै साधकले पनि ब्रह्मचर्यको रक्षा गरेर तपस्याद्वारा देदीप्यमान, इन्द्रियहरूबाट अपराभूत, विषय वासनालाई त्यागेर आफ्ना इन्द्रियहरूमाथि नियन्त्रण कायम राखोस् । कुनै पनि दोषलाई आफ्नो नजिक आउन नदेओस् । जसरी अग्नि कहीं प्रकट हुन्छ र कहीं अप्रकट, त्यसैगरी साधक पनि कहीं प्रकट कहीं अप्रकटरूपले रहोस् । ऊ कहिलेकाहीं यस्तो रूपमा पनि प्रकट हुनुपर्छ जसबाट कुनै पनि पुरुषले उसको उपासना अग्निसमान तेजस्वी बन्नका लागि गरोस् । उसले यज्ञ, हवन गर्नेको अतीत र भावी कष्टहरूको शुभाशुभ फललाई भस्म गरिदिन्छ । साधकले विचार गर्नुपर्छ कि अग्नि टेढो, तेर्सो, सीधा, लामो, चौडा देखिन्छ । वास्तवमा त्यस्तो हुँदैन । त्यसैगरी सर्वव्यापक आत्मा पनि आफ्नो मायाद्वारा रचेको कार्य-कारण-रूप जगत्‌को तत्-तत् वस्तुहरूको नाम, रूपसँग कुनै सम्बन्ध राख्दैन र पनि त्यसैको रूप, गुण प्रतीत हुन लाग्दछ ।

हे राजन् ! मैले चन्द्रमाबाट यो शिक्षा ग्रहण गरेँ कि त्यसको गति कहिल्यै जान्न सकिन्न । तर कालको प्रभावबाट चन्द्रमाका कलाहरू देखिन्छन् । यद्यपि चन्द्रमा त चन्द्रमा नै हो, त्यो न घट्छ, न त बढ्छ नै । त्यसैगरी जन्मदेखि मृत्युसम्म जति पनि अवस्थाहरू छन्, सबै शरीरका नै हुन् । आत्माको त्यससँग अलिकति पनि सम्बन्ध हुँदैन । जसरी आगोको लप्का र दीयोको ज्वाला क्षण-क्षणमा उत्पन्न भएर नष्ट हुन्छ र यिनको यो क्रम निरन्तर चलिरहन्छ तर देखिँदैन, त्यस्तै

नै जलप्रवाहसमान वेगवान् कालद्वारा क्षण-क्षणमा प्राणीहरूको उत्पत्ति तथा विनाश भइरहन्छ तर अज्ञानवश हामी देख्दैनौं ।

हे राजन् ! सूर्यबाट मैले यो शिक्षा लिएँ कि जसरी सूर्यले आफ्ना कीरणहरूद्वारा पृथ्वीको जल खिँचेर बादलद्वारा समयमै त्यसलाई वर्षाउँछन्, त्यसैगरी योगी पुरुष पनि इन्द्रियहरूद्वारा शुभ लक्षणहरूलाई ग्रहण गरेर समय आएपछि त्यसलाई बाँडफाँड गर्छ । कुनै पनि बेला उसलाई आसक्ति हुँदैन । स्थूल बुद्धि भएका पुरुषलाई पानीका विभिन्न पात्रमा प्रतिविम्बित भएको सूर्य त्यसैमा प्रविष्ट भए जस्तै देखिन्छ, सूर्य अनेक देखिन्छन् तर त्यो अनेक नभएर एक नै हो । अनेक देखिनाले अनेक त हुँदैन । त्यसरी नै चल, अचल उपाधिको भेदबाट यस्तै ज्ञात हुन्छ कि प्रत्येक व्यक्तिको आत्मा अलग-अलग छ । यस्तो ठान्नेको बुद्धि मोटो हो । वास्तवमा आत्मा सूर्यसमान नै हुन्छ, त्यसको स्वरूपमा कुनै भेद हुँदैन ।

राजन् ! कसैलाई पनि अति स्नेह गर्नुहुँदैन र आसक्ति राख्नु हुँदैन अन्यथा त्यसले आफ्नो बुद्धिलाई चञ्चल गराउँछ, आफ्नो स्वतन्त्रतालाई गुमाउन पुगिन्छ र दीनहीन भइन्छ । यसबाट उसलाई अत्यन्त क्लेश उठाउनु पर्ने हुन्छ । आसक्तिको कारण एउटा कथामा परेवाका सम्पूर्ण परिवार नै नष्ट भएको दृष्टान्त पाइन्छ ।

हरि ॐ तत्सत् ।

## (पचासौं भाग)

महाराज यदुले अवधूत दत्तात्रेयलाई आफ्नो श्रीमुखबाट त्यस परेवाको कथा सुनाउनको लागि हात जोडेर प्रार्थना गरे जो आफ्नो परिवारसहित नष्ट भएको थियो । हे प्रभु ! त्यो परिवार कसरी आफ्नो कुटुम्बसहित नष्ट भएको थियो, त्यो कथा मलाई सुनाउने दया गर्नुहोस् ।

दुवै हात जोडेका महाराज यदुको वचन सुनेर भगवान् दत्तात्रेय भन्नुहुन्छ– राजन् ! जंगलको एउटा सुन्दर रूखमा गुँड बनाएर परेवाका अति सुन्दर एक जोडी रहन्थे । धेरै वर्ष बितेपछि परेवाको जोडीमा एक अर्काप्रतिको प्रेम दिन दुई गुना, रात चौगुना बढ्न लाग्यो । गृहस्थ धर्मको प्रेममा यति डुबे कि उनीहरू दुवै एक अर्काको दृष्टिमा एक सिक्काका दुई पाटा थिए । तिनीहरूलाई प्रेमको डोरीले कसेर बाँध्यो । एक अर्काको प्रेममा यति धेरै बाँधिएका थिए कि त्यहाँका रुखका हाँगामा ती फुर्रफुर्र गर्दै सँगसँगै डुल्ने, सुत्ने, उठ्ने, बस्ने गर्न थाले । परेवाको जोडीमा यति प्रेम बढ्न गएको थियो कि पोथीले भाले परेवासँग जे भन्दथी त्यसलाई उसले ठूलोभन्दा ठूलो कष्ट उठाएर पनि पूर्ण गर्ने गर्दथ्यो र पोथी पनि आफ्नो कामुक पतिको हरेक कामना पूर्ण गर्नमा पछाडि पर्दैनथी । समय आएपछि पोथीलाई पहिलोपटक गर्भ रह्यो र उसले आफ्नो पतिको नजिकै गुँडमा अण्डा दिई । प्रभु कृपाबाट समय भएपछि अण्डा फुट्यो र त्यसबाट अति प्यारो बच्चा निस्क्यो जसको अंग-अंगबाट कोमलता र सुन्दरता झल्कन्थ्यो । परेवाको जोडी आफ्ना बच्चाको स्नेहमा लागे । ती जोडीले बडो प्रेम, आनन्द र उत्साहपूर्वक बच्चाको लालपालन गर्दथे र त्यसको मधुर आवाज सुनेर दुवै मग्न भएर हरेक क्षण प्रसन्न रहन्थे । त्यो पनि आफ्नो सुकोमल प्वाँखले माता-पिताको प्वाँखको स्पर्श गरेर प्रफुल्ल हुन्थ्यो । सरल चेष्टाबाट माता-पितालाई मनोर ञ्जन गराउँदै र फुर्रफुर्र गर्दै आफ्नो माता-पिता कहाँ दौड्दै आउँथ्यो ।

राजन् ! परेवाको जोडी भगवान्को मायाबाट अनभिज्ञ भएर अन्धा भएका थिए । उनीहरूको तन, मन, हृदयको बन्धन अटुट भएको थियो । ती आफ्ना नयाँ बच्चाको प्रेम र पालनपोषणमा यति मग्न थिए कि सबै कुरा बिर्सी बसेका थिए । एक दिनको कुरा हो । परेवाको जोडी आफ्नो बच्चालाई खुवाउनको लागि मीठा-मीठा फलको खोजीमा जंगलतर्फ गएका थिए । ती दुवै धेरै समयसम्म चाराको लागि चारैतर्फ जंगलमा घुम्दै रहे । संयोगवश यता एउटा व्याधा घुम्दैफिर्दै जाल बोकेर गुँडको नजिक आइपुग्यो । माथि फर्केर हेर्दा रूखको गुँडको नजिकै परेवाका बच्चा फुर्रफुर्र उडेको उसले देख्यो । उसले तुरुन्त जाल फैलाएर बच्चालाई समात्यो । परेवाको जोडी आफ्नो बच्चालाई खुवाउनको लागि र स्नेहपूर्वक पालन गर्न सदा तत्पर रहन्थे । पहिले तिनलाई खुवाई पिलाई मात्र बचेको आफू खाने गर्दथे । ती चारा लिएर गुँडमा आउँदा पोथीले देखी कि उसको बच्चा दुष्ट व्याधाको जालमा फड्फडाइरहेको छ र महादुःखी भएर चीँ-चीँ गरिरहेको छ । आफ्नो प्राणको टुक्राको यस्तो दशा देखेर पोथीको कष्टको सीमा रहेन । ऊ पागलजस्तै रुँदै, चिच्याउँदै आफ्नो बच्चाको निकट पुगी । प्रभुको मायाबाट उसको मन अनियन्त्रित भयो । उसको चित्त अत्यन्तै दुःखी थियो । ऊ बच्चाको माया-मोहमा मृत्युको डोरी आफ्नो घाँटीमा हाल्न तयार भई र आफ्नो शरीरको सुधबुध हराएर ऊ आफै व्याधाको जालमा गएर फँसी । त्यो देखेपछि भाले परेवाले अति दुःखी भएर विलाप गर्न लाग्यो ।

राजन् ! त्यसबेला उसको दशा अत्यन्तै दयनीय थियो । ऊ विलाप गर्दै भन्दथ्यो– म बडो अभागी रहेछु, भगवान्ले मेरो त सत्यानाश गर्नुभयो । मानिस हो, मेरो आयु नै कति छ ? अहिले मेरा आशाहरू पनि पूरा भएका छैनन्, न त आशाहरूबाट मनलाई शान्ति नै मिलेको छ । मेरा कर्म-धर्म केही पनि काम आएनन् । बडो मेहनतले बसाएको मेरो संसार नै चौपट हुन गइरहेको छ । गृहस्थ आश्रमको सुख मैले राम्ररी भोग्न पनि पाइनँ । मेरो बसीबसाउ घर मेरै आँखाअगाडि चौपट हुन गइरहको छ । मेरी प्राणप्यारी मेरो आज्ञा पालनमा कहिल्यै पछि परिन । उसले सधैं मलाई आफ्नो देवता सम्झन्थी, मेरो भनाइलाई पालन गर्थी र सबै प्रकारले मेरो योग्य नै थिई । भगवान्ले हामी दुवैलाई यति सुन्दर बनाएर अब बिगार्नमा नै आफ्नो कम्मर कस्नुभएको जस्तो लाग्दछ । आज मेरी प्राणप्यारी मलाई एक्लो छोडेर आफ्ना सुकुमार बच्चाको साथ स्वर्गलोक जाने तयारीमा छ । मेरो बच्चा मबाट बिछोडिन गइरहेको छ, पत्नी पनि गई भने त मेरो यो संसारमा के काम छ ? मेरो जीवन त पत्नी र स्नेहशील बच्चाको पीडाबाट बित्ने भयो । यस गुँडमा बसेर यस्तो जीवन म के का लागि जिउँ ?

राजन् ! परेवालाई स्पष्ट दृष्टिगोचर भइरहेको थियो कि आफ्नी पोथी र बच्चा कालको हातमा परेका छन्, तिनको तड्पाइ परेवाले देख्न सकेन । ऊ रोई-रोई दीन र हीन भइसकेको थियो । ऊ पनि पागलजस्तै भएर जानी बुझीकन आफै जालमाथि कुद्यो ।

राजन् ! व्याधा त अत्यन्तै क्रूर हुन्छ । परेवाको जोडी र तिनको बच्चा पाएपछि ऊ धेरै प्रसन्न भयो । उसले आफ्नो मेहनत सफल भएको ठान्यो र ऊ तड्पिँदै गरिरहेका पंछीहरूलाई जालसहित आफ्नो काँधमा बोकेर हिँड्यो ।

हरि ॐ तत्सत् । जय गुरुदेव !

# प्रेम-तरबारको धार

***यस स्तम्भअन्तर्गत हामीले सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'प्रेम धार तरबार की' विषयको प्रवचनलाई 'प्रेम-तरबारको धार' शीर्षकमा प्रकाशन गरिएको छ।***

आज म तिमीलाई प्रेमको त्यस सागरमा यात्रा गराउनका लागि लिएर जाँदैछु जुन जीवनको एउटा आनन्ददायक क्षण हो किनकि जीवन-पथ अत्यन्तै उबडखाबड, बिझाउने, कठोर र दुर्धर्ष छ। जीवन-पथमा यति धेरै उतारचढाव आउँछ कि विश्राम गर्नका लागि क्षणभरमा कुनै स्थान पनि मिल्दैन। जीवनको यस बाटोमा अत्यन्तै तीक्ष्ण मोडहरू छन् जसमा मानिस आफैलाई अल्झिएको महसुस गर्दछ...र, यसैले यदि हामी सही ढङ्गले हेर्छौं भने पूरै जीवनमा कतै कुनै रस छैन, कुनै आनन्द छैन, कुनै चेतना छैन, कुनै फुहार छैन।

त्यसैले आज म तिमीलाई यी बाधाहरूबाट अलग हटाएर प्रेमको डुंगामा यात्रा गराउन लिएर जाँदैछु, आज म तिमीलाई प्रेमको सागरमा लिएर जाँदैछु, आज तिमीलाई आफूसँगै त्यहाँ लिएर जाँदैछु जहाँ प्रेमको अनन्त ज्ञान छ।

जीवन-यात्राको सम्पूर्ण रस प्रेममा छ। र, जबसम्म जीवनमा प्रेम हुँदैन तबसम्म मनुष्यता प्राप्त हुनै सक्दैन, जीवनको यात्रा प्रारम्भ नै हुन सक्दैन, जीवनको यात्राको मूल उद्देश्य नै प्रेम हो र अन्तिम विन्दु पनि प्रेम नै हो।

...जहाँ म प्रेम शब्दको व्याख्या गरिरहेछु, जहाँ म तिम्रो सामु प्रेम शब्दलाई सम्बोधित गरिरहेछु, त्यस प्रेममा कतै कुनै प्रकारको वासना छैन, कुनै नारी देह छैन, कुनै मानिसको बलिष्ठ शरीर आँखा सामु छैन, कुनै आन्तरिक स्वार्थपूर्ति छैन।

–प्रेम त एउटा उत्फुल्ल सुवास हो, एउटा सुगन्ध हो, प्रेम त एउटा बगिरहेको झरना हो जसको मुनि स्नान गर्नाले पूरा तन-मनमा मस्ती छाउँछ, महसुस गराइदिन्छ कि यो सारा शरीर आनन्द र तृप्तिमा डुबेको छ। प्रेम एउटा यस्तो वेग हो जसको स्पर्श

गर्नाले, अचम्मको आनन्द छाउँछ, जीवनको संगीत शरीरको प्रत्येक तारलाई यसप्रकारले झंकृत गरिदिन्छ कि पूरा शरीर नृत्य गर्न लाग्दछ ।

तिमी शिष्यताको मोडमा बढिरहेका छौ, एउटा साधनाको मोडमा बढिरहेका छौ, एउटा उपासनाको मोडमा बढिरहेका छौ । तर म तिमीलाई एक क्षण रोकेर सोच्नका लागि बाध्य गरिरहेको छु... तिम्रो जीवनको एक क्षणलाई म समातेर उभिएको छु, त्यस साधना र उपासनाको बीचमा एक क्षण रोकिनका लागि भनिरहेको छु, म तिमीलाई स्पष्ट भनिरहको छु कि केवल आँखा बन्द गरेर ध्यान गर्नु र निरन्तर मंत्र जप गर्नु नै जीवनको पूर्णता होइन, केवल गुरु मन्त्र जप गर्नु र केवल राम-राम गर्नु नै जीवनको श्रेष्ठता होइन, केवल कुनै मन्त्रको साधना र आँखा बन्द गरेर पलेटी मारेर बस्नु नै जीवनको श्रेष्ठता होइन ।

जीवनको श्रेष्ठता त जीवनलाई परितृप्त गर्नुमा छ । जीवनको श्रेष्ठता त आँखामा, जीवनमा, रोम-रोममा र प्रत्येक अणु-अणुमा एउटा आनन्द, एउटा मस्ती छ... यो आनन्द, यो मस्ती, यो जीवनको पूर्णता, यो जीवनको श्रेष्ठता, यो जीवनको सुख र यो जीवनको सौन्दर्य प्रेममा छ, यसैले म भन्छु कि प्रेममा कुनै दिशा हुँदैन, प्रेममा कुनै सीमा हुँदैन, प्रेममा कुनै प्रकारको कुनै सम्बन्ध हुँदैन, असम्बन्ध हुँदैन, प्रेम त जोसँग पनि हुन सक्छ ।

–प्रेम त प्रभु र मनुष्यबीच हुन सक्छ ।

–प्रेम त एक प्राणी र गुलाबको फूलबीच हुन सक्छ ।

–प्रेम त हिमालयसँग हुन सक्छ ।

–प्रेम त बगेको झरनासँग हुन सक्छ ।

–प्रेम त कलकल गर्दै बगेको नदीसँग हुन सक्छ, वनप्रान्तसँग हुन सक्छ ।

–र, प्रभुको त्यस नित्य लीलामय स्वरूपसँग हुन सक्छ ।

...र, त्यो तब हुन सक्छ जब तिमीभित्र प्रेमको बीज पलाउँछ, जब तिमीभित्र एउटा ज्वाला उत्पन्न हुन्छ, जब तिमीभित्र एउटा विचार पलाउँछ, जब तिमीभित्र एउटा धारणा पलाउँछ ।

'रामानन्द' आफैमा एक श्रेष्ठतम र अद्वितीय योगी थिए । साधनाको उच्चतामा पुगेका, प्रभुको साक्षात् दर्शन गरिसकेका, प्रभुलाई आफूमा आत्मसात् गर्दै, प्रभु सामु बस्दै गरेका रामानन्दको एउटा शिष्य एकपटक उनी सामु पुग्यो ।

उसले भन्यो– म साधना गर्न चाहन्छु, म केही सिद्धि प्राप्त गर्न चाहन्छु, म सिद्धिलाई स्पर्श गर्न चाहन्छु, म आफ्नो सामु तारा वा महाकालीलाई प्रकट गर्न चाहन्छु ।

रामानन्दले साधे– तिमी प्रेम गर्न जान्दछौ ? शिष्य बडो आश्चर्यचकित भयो । उसले भन्यो– साधना, उपासनासँग प्रेमको के सम्बन्ध ? म हजूरसमक्ष साधना सिक्न आएको छु, हजूर मेरा गुरु हुनुहुन्छ, मैले हजूरसँग दीक्षा लिएको छु, म हजूरको शिष्य हुँ, म हजूरको प्राणसँग जोडिएको छु, मेरो जीवनको अर्थ प्रेम होइन, म प्रेमलाई तुच्छ र हेय मान्दछु । म त हजूरसँग त्यस ज्ञान, चिन्तन र धारणालाई प्राप्त गर्न चाहन्छु जसको माध्यमबाट कालीको दर्शन गर्न सकूँ, भगवती ताराको दर्शन गर्न सकूँ, ती महाविद्याहरूलाई प्राप्त गर्न सकूँ... त्यसैले हजूरसमक्ष आएको छु । हजूर मलाई त्यो उपासना, त्यो साधना, त्यो बाटो, त्यो मन्त्र दिनुहोस्, मलाई बस्ने क्रिया सिकाइदिनुहोस्, मैले कुन प्रकारको साधना गर्नुपर्ने हो त्यसको मलाई चिन्तन दिनुहोस् ।

रामानन्दले सोधे– के तिमी प्रेम गर्न जान्दछौ ?

शिष्य बडो आश्चर्यचकित भयो । दोस्रोपटक पनि यही प्रश्न ! उसले सोच्यो कि आज गुरुलाई केही भएको छ । त्यो गुरुसमक्ष त केही बोल्न सक्दैन थियो तर हतप्रभ, आश्चर्यचकित भयो ।

शिष्यले भन्यो– म हजूरको भावलाई बुझ्न सकिरहेको छैन । शायद हजूरले मेरो प्रार्थनाको अर्थलाई बुझ्न सक्नु भएन । म हजूरको शिष्य हुँ र म हजूरको चरणमा बसेको छु, म साधना गर्न चाहन्छु, म सिद्धि प्राप्त गर्न चाहन्छु, म जीवनको पूर्णता चाहन्छु, म हजूरबाट ती गोपनीय क्रिया, ती मन्त्र, ती चिन्तन सिक्न चाहन्छु जसद्वारा म आफ्ना इष्टलाई आफू सामु प्रत्यक्ष प्रकट गर्न सकूँ । म उसलाई देख्न सकूँ, म उसलाई आफैमा आत्मसात् गर्न सकूँ, यसैले मलाई त्यो मन्त्र दिनुहोस्... त्यो कुन मन्त्र हो ? त्यो कुन साधना विधि हो ? त्यो कुन अनुष्ठान हो ?

रामानन्दले एकक्षण फेरि शिष्यतर्फ हेरे र फेरि त्यही प्रश्न सोधे– के तिमी प्रेम गर्न जान्दछौ ?

शिष्य हतप्रभ भयो । हात जोडेर प्रणिपात भएर गुरुको चरणमा लुटपुटिएर भन्यो– गुरुदेव ! शायद हजूरले मलाई बुझिरहनु भएको छैन, हुनसक्छ मैले हजूरलाई बुझ्न सकिरहेको छैन । म फेरि हजूरसँग प्रार्थना गर्दछु कि म साधनाको क्रिया, साधनाको ज्ञान, साधनाको चिन्तन प्राप्त गर्न चाहन्छु ।

रामानन्दले भने– मूर्ख ! तिमी शिष्य होइनौ, तिमीमा शिष्यताको पात्रता नै छैन, तिमी शिष्य बन्नै सक्दैनौ, तिमी आफ्ना इष्टको साक्षात् दर्शन गर्नै सक्दैनौ किनकि जसको हृदयमा प्रेमको अंकुर फुट्दैन उसले साधना के गर्ला ? जसको हृदयमा प्रेमको नदी बगेको छैन उसलाई पौडन के आउला ? जसको हृदयमा प्रेमको फूल फुलेको छैन उसले सुगन्धको अनुभव कसरी गर्ला ? तिमीले साधनामा सिद्धि प्राप्त गर्न सक्दैनौ । तिमीले साधना गर्नुभन्दा अगाडि आफ्नो हृदयलाई जाग्रत गर्नुपर्दछ, त्यसमा प्रेमको अंकुर फुटाउनु पर्दछ, महसुस गर्नुपर्दछ कि जीवनमा केही चिन्तन, केही विचार, केही धारणा छ । क्रमशः

जय गुरुदेव !

आयुर्वेद

# सरल र महत्त्वपूर्ण जडिबुटी

**संस्कृत नामः-** जीरक (रोगावस्थालाई न्यून गर्ने भएकोले), जरण (पाचन शक्ति वृद्धि गर्ने भएकोले, अजाजी (मन्दाग्नि नाश गर्ने भएकोले) ।

**नेपाली नामः-** जीरा ।

**अंग्रेजी नामः-** क्युमिन सिड (Cumin Seed)

**ल्याटिन नामः-** *Cuminum cyminum Linn.*

कुल नामः-Umbelliferae

## जीरा

**बिरुवाको वर्णनः** जीराको बिरुवा सौँफको बिरुवासमान ३० देखि ९० से.मी.उचाइको हुने गर्दछ। काण्ड हाँगायुक्त र कोणीय हुन्छ। यसका पातहरू ५ देखि १० से.मी.लामो र रेखा वा धागोसमान हुने गर्दछन् । पुष्प सेतो वा गुलाबी रंगको हुने गर्दछ र छाता आकारको गुच्छामा रहेको हुन्छ। फल १/४ इन्च लामो, सानो, खैरो रंगको हुने गर्दछ । यसको फूल र फल जाडो मौसमको अन्ततिर देखिने गर्दछ । जीरा मूलरूपमा बढी तथा मध्यम तापक्रम भएका स्थानहरूमा पाइन्छ। नेपालको तराई तथा समुद्री सतह नजीकका क्षेत्रमा यसको खेती गरिन्छ । बजारमा जीरा सजिलै किन्न पाइन्छ ।

जीरालाई खाना तथा तरकारीका विविध परिकारहरूमा मसलाको रूपमा सयौं वर्ष पहिलेदेखि नै प्रयोग गरिँदै आएको छ । जीरामा भएको उडनशील तेलका कारण यसले तरकारीहरूलाई सुगन्धित तथा स्वादिलो बनाउने गर्दछ ।

**रासायनिक संगठनः-** उडनशील तेल, क्युमिन अल्डिहाइड (4-isopropylbenzaldehyde), क्युमिनोल, क्युमिनल, भिटामिन 'ए' र 'सी', कार्बोहाइड्रेट, खनीजहरूमा क्याल्सियम, फस्फोरस, आइरन आदि । क्युमिन तत्त्वलाई भोक जगाउने, जीवाणु नाश गर्ने तत्त्वको रूपमा लिइन्छ ।

**प्रयोज्य अङ्गः-** बीज

**गुणः-** लघु, रुक्ष

**रसः-** कटु

**विपाकः-** कटु

**वीर्यः-** ऊष्ण

**औषधीय प्रयोग (Therapeutic Uses)ः-** मुख्य रूपमा जीराको प्रयोग निम्न अवस्थामा प्रयोग गर्न सकिन्छ ।

१. जीर्ण अतिसार (Chronic Diarrhoea)
२. आउँ अर्थात् प्रवाहिका (Dysentry)
३. पाचन शक्ति बढाउन

**प्रयोग गर्ने तरीकाः-** बीजलाई चूर्णको रूपमा एकल वा अन्य द्रव्यहरूसँग मिसाएर प्रयोग गर्न सकिन्छ । सुगन्धका लागि चूर्ण बनाउनुभन्दा पहिले बीजलाई हल्कारूपमा भुट्न सकिन्छ । नभुटेको बीज विबन्धकारक अर्थात् दिसा रोक्ने (More constipative) हुने भएकोले यसलाई जीर्ण अतिसारको उपचारमा प्रयोग गरिन्छ । अग्निमान्द्यमा भुटेको जीरा चूर्ण र सैन्धव लवण महीसँग सेवन गर्दा फाइदा गर्दछ ।

**मात्राः-** १ चम्चा (५ ग्राम) जीराको चूर्ण पानीसँग दिनको तीनपटक सेवन गर्ने । यसको गन्धबाट बच्न केही चिनी, मह वा अन्य गुलियो पदार्थ मिसाएर प्रयोग गर्न सकिन्छ । उक्त चूर्णको चिया बनाएर वा चियामा हालेर पनि सेवन गर्न सकिन्छ । अतिसार र प्रवाहिकामा नभुटेको जीराको

चूर्ण प्रयोग गर्नुपर्दछ । पाचन शक्ति बढाउन हल्का भुटेको जीराको चूर्ण खाना अघि सेवन गर्नुपर्दछ ।

**अन्य रोगमा जीराको प्रयोग–**

जीरा कफवातशामक तथा पित्तवर्धक छ । अर्थात् शरीरमा ऊष्मा बढाउँछ, शीत नाश गर्दछ ।

बिच्छीको विषमा र सर्पदंशमा तथा वेदनायुक्त स्थानहरूमा जीरा-चूर्णको लेप गरिन्छ ।

छालाको वर्ण विकार, चिलाउने आदि रोगमा पनि जीराको लेप गरिन्छ ।

अरुची, वमन, अजीर्ण (खाना नपचेको अवस्था), आध्मान (पेटमा वायु बढ्नु, पेट फुल्नु), उदरशूल, ग्रहणी, कृमी आदि रोगमा भुटेको जीराको चूर्णलाई महसँग मिसाएर सेवन गरिन्छ ।

नयाँ तथा पुरानो ज्वरमा विशेष गरेर वातप्रधान ज्वरहरूमा जीराको प्रयोग लाभदायक हुन्छ । जीर्ण ज्वरमा ५ ग्राम जीरालाई गाईको दूधमा भिजाएर सुकाउने र यसलाई चूर्ण बनाएर मिश्री मिसाएर दिनको तीनपटक सेवन गर्नाले दुर्बलता नाश हुन्छ ।

पेटको जुकामा १५ ग्राम जीरामा ४०० ग्राम पानी मिसाउने र उमाल्ने । यसको ४ भागको १ भाग बाँकी रहने गरी उमालेर काढा बनाउने र सेवन गराउने जसबाट पेटका कीरा मर्दछन् ।

मलेरियाको ज्वरमा १० ग्राम करेलाको रसमा जीराको चूर्ण ५ ग्राम मिसाएर दिनमा तीनपटक पिउनाले लाभ मिल्दछ ।

जीराको ४ ग्राम चूर्णलाई गुडमा मिसाएर भोजन गर्नुभन्दा १ घण्टा पहिले सेवन गर्नाले विषमज्वर, मन्दाग्नि र वातरोग शान्त हुन्छ ।

हृदयरोग तथा रक्त विकारहरूमा जीराले फाइदा पुर्‍याउँछ । श्वेतप्रदर तथा वाजीकरणार्थ यसको प्रयोग हुन्छ । श्वेतप्रदर र रक्तप्रदरमा ५ ग्राम जीराको चूर्ण तथा १० ग्राम मिश्री चूर्ण दुवै मिसाएर चामलको पानी अर्थात् चौलानीका साथ दिनको दुईपटक सेवन गर्नाले लाभ मिल्दछ ।

वमनमा जीरालाई रेशमी कपडामा बेरेर बत्ती बनाएर त्यसको धूवाँ सुँघ्नाले धेरै दिनदेखिको वमन बन्द हुन्छ ।

कुकुरको विषमा ४ ग्राम जीरा र ४ ग्राम मरीच घोट्ने र त्यसलाई पानीले छानेर दिनको दुईपटक पिउनाले फाइदा मिल्दछ ।

स्तन्य वर्धनका लागि गुडका साथमा जीराको चूर्ण प्रयोग गरिन्छ ।

गर्भवती महिलाहरूमा गर्भाशयविशोधन, स्तन्यजनन, बलवर्धन आदि कर्मको लागि सेवन गराइन्छ ।

कटु पौष्टिक भएका कारण बलवृद्धिका लागि पनि प्रयोग गर्न सकिन्छ ।

मूत्राघात तथा अश्मरीमा जीराको चूर्ण चिनी वा मिश्रीसँग प्रयोग गर्न सकिन्छ ।

बजारमा पाइने विशिष्ट योगहरू :- जीराकादि मोदक, जीरकाद्यरिष्ट, जीरकाद्य तैल, जीरकाद्य चूर्ण आदि ।


**सन्दर्भ ग्रन्थहरू:–**

**द्रव्यगुण विज्ञान द्वितीय भाग–** (**आचार्य प्रियव्रत शर्मा**)

**आयुर्वेद जडिबुटी रहस्य–** (**आचार्य बालकृष्ण**)

योग विशेष

# लिङ्ग मुद्रा र योनि मुद्रा

लिङ्ग मुद्रा पुरुषहरूका लागि उपयुक्त मुद्रा हो भने योनि मुद्रा स्त्रीहरूका लागि । यी मुद्राहरूले विचार वा चिन्तनको रूपमा प्रवाह भइराख्ने कामवासनायुक्त तरंगहरूलाई हटाउने कार्य गर्दछन्, सम्पूर्ण नकारात्मक सोचाइ र चिन्तनलाई पूर्णरूपले हटाई शरीरमा नयाँ शक्तिको संचार गराएर व्यक्तिलाई मानसिकरूपले दरिलो र सशक्त बनाउँदै एकाग्रता वृद्धि गराउँदछन्, दायाँ मस्तिष्कमा शक्ति प्रवाहित गराई हलचल उत्पन्न गराउँछन् । यस मुद्राको अभ्यास गर्ने विधिलाई तल प्रस्तुत गरिन्छ–

## लिङ्ग मुद्रा

– सजिलोसँग ढाडलाई सीधा गरी दुवै आँखा बन्द गरी पद्मासन वा सिद्धासनमा बस्ने ।

– दुवै हातका औँलाहरूलाई एक आपसमा चित्रमा देखाएझैं कैंची पार्ने,

– दुवै हातका औँलाहरू कैंची गरिसकेपछि बायाँ हातको बूढी औँलालाई चित्रमा देखाएझैं माथितर्फ सीधा फर्काउने,

– यसरी हातलाई मिलाई यस मुद्राको अभ्यास गर्न सकिन्छ,

– हातलाई कटी (नाभीभन्दा तल कम्मर) मा सजिलोसँग राख्ने ।

## योनि मुद्रा

– यस मुद्राको अभ्यासमा पनि सजिलोसँग ढाडलाई सीधा गरी आँखा बन्द गरी पद्मासन वा सिद्धासनमा बस्ने,

– दुवै हातका औँलाहरूलाई एक आपसमा कैंची पारेर दुवै हातका चोरी औँलाका टुप्पाहरूलाई सीधा गरी जोड्ने,

– चोरी औँलाझैं दुवै हातका बूढी औँलाका टुप्पालाई पनि जोड्ने,

– चित्रमा देखाएझैं हातका औँलाहरू मिलाई नाभीभन्दा तलको भागमा राखी यस मुद्राको अभ्यास गर्न सकिन्छ ।

यसरी पुरुषहरूले लिङ्ग मुद्रा र स्त्रीहरूले योनि मुद्राको अभ्यास गर्न सकिन्छ । यस अभ्यासबाट ब्रह्माण्डमा व्याप्त पुरुष एवं प्रकृतियुक्त दिव्य शक्तिहरूलाई आ-आफ्नो शरीरमा स्थापित गर्न सकिन्छ ।

**फाइदाहरू–**

यी मुद्राहरूको कुशल अभ्यासले स्त्री र पुरुष जातिमा रहने रचनात्मक शक्तिलाई प्रस्फुटित गराउँदछ, शारीरिक एवं मनसिकरूपमा उत्पन्न हुने कामवासनाहरूलाई सन्तुलित गराई ऊर्ध्वगामी बन्नलाई अभिप्रेरित गर्दछ, मानसिक एकाग्रतालाई बढाउने हुनाले चिसो प्रकृतिका दम, रुघा, खोकी, कफ, पिनास, आँखाबाट आँसु आउने समस्याका साथै निम्न रक्तचापका बिरामीलाई विशेष फाइदा पुऱ्याउँछ ।

जय गुरुदेव !

**तान्त्रिक साधना**
**तान्त्रिक ध्यान**
**मानव जीवनको**
**वास्तविक ज्ञान ।**

दशैं आउँछ, दशैं जान्छ । ऋतुको हेरफेरमा यस्तो चक्र चलिरहन्छ, तर त्यसको साथमा आउने हाम्रा चाडपर्वसँग गाँसिएको संस्कृति, संस्कार र परम्परालाई परिस्कृत तुल्याउँदै जानु हरेक पुस्ताको कर्तव्य हुन्छ । पुरानो संस्कारलाई वर्तमान चेतनाको कसीमा घोटेर, बुझेर व्यवहारमा ल्याउनाले संस्कृतिको जगेर्ना हुन्छ, त्यसको विकास हुन्छ र त्यो परिस्कृत हुन्छ । संस्कारलाई नबुझी, नचिनी यतिकै पछ्याइरहन सकिन्न । पुर्खाको विश्वासलाई अन्धविश्वासमा परिणत गर्ने मूल तत्व अज्ञानता हो र अज्ञानताको जड बेवास्तामा लुकेको हुन्छ । 'आयो दशैं ढोल बजाई, गयो दशैं ऋण बोकाई' भनी पछुतो गर्नु संस्कृति हैन, विकृति हो ।

हाम्रो संस्कृतिमा धेरै कृतिका कुराहरू छन् । वर्तमानमा विश्व चासोको विषय बनेको जैविक विविधताको कुरालाई दशैको परप्रेक्ष्यमा कोट्याउँदा हाम्रो संस्कार कति परिस्कृत र सम्पन्न छ भन्ने उजागर हुन्छ । एसिया महाद्वीपको कृषि सभ्यता र आयुर्वेदिक पद्धतिको उच्च छविलाई दशैंको फूलपातीमा भित्र्याइने/पूजिने जातजातका वनस्पति र पातीले उजागर गर्ने गरेको छ । सम्पूर्ण विश्वलाई पालन गर्न अग्रिम भूमिका खेल्ने धान, जगत कल्याणकारी फल केरा, सर्वहितकारी बेसार, सबैको चित्त आकर्षण गर्ने जयन्ती र अशोक वृक्षको फूल, गुणी फल बेल तथा दारिम, सुगन्धित कन्द हलेदो तथा पौष्टिक तत्त्वयुक्त मानेकर्कलो समेतका नौ थरी वनस्पति नवदुर्गालाई चढाएर दशैं मनाइन्छ । यी वनस्पतिका गुण, स्वरूप र स्वभावलाई बुझेर आफ्नो परम्परा धान्न सक्यौं भने हाम्रो संस्कृति समयसापेक्ष हुन्छ । र, संस्कृतिसँगै सम्पदाको पनि संरक्षण हुन्छ । यहाँ हामीले फूलपाती भित्र्याउँदा प्रयोग हुने वनस्पतिबारे केही जानकारी सँगाल्ने प्रयत्न गर्दैछौं ।

केराः लाटोलाई पनि केरा, बाठोलाई पनि केरा, हात्तीलाई पनि केरा र बाँदरलाई पनि केरा ! सबै प्राणीको प्रिय फल केराको आज १२० भन्दा बढी राष्ट्रमा खेती हुन्छ । संसारमा प्रत्येक वर्ष बिक्री हुने केराका कोशा एकपछि अर्को जोड्दै गयौं भने यो पृथ्वीको १४०० फन्को मार्न पुग्दछ । केराको मुख्य उद्योग दक्षिण अमेरिकी राष्ट्रहरूले कुम्लाएका छन् । कतिपय अफ्रिकी देशहरूमा त हाम्रो भातको स्थान नै केराले ओगट्दै आएको छ । तर केराको उद्गमस्थल भने एसिया हो । नेपालमा मालभो, मुग्रे, झुप्रे आदि थुप्रै थरिका केरा पाइन्छन्, तर तिनको लेखाजोखा गर्न चाहिँ बाँकी नै छ । हाम्रा कतिपय जङ्गली केरामा अझ पनि बीउ लाग्छ । बीउ लाग्ने केरा विश्वमा दुर्लभ हुँदैछ । केराको वंश विकास गर्नुपर्दा त्यसको बीउ नै आवश्यक हुन्छ । जैविक प्रविधि (टिस्यू कल्चर) बाट नेपालले पनि केरा खेती गर्न थालेको छ । यसबाट आर्थिक लाभ निश्चय नै बढ्छ, तर जङ्गली केराको महत्त्वलाई आज ठम्याउन सकिएन भने विश्वले नै पछुताउने दिन नआउला भन्न सकिँदैन, किनभने बीउ लाग्ने जङ्गली केराको स्रोत दुर्लभ हुँदैछ ।

नेपाली संस्कृतिमा सगुन र मङ्गलसूचकको रूपमा केरा सर्वव्यापी छ । यज्ञहोमको मण्डप होस् वा सामान्य स्वागतद्वार त्यहाँ केराको बोट हुन्छ । अपुङ्गो होस् वा पितृलाई अर्पण गर्ने

**संस्कारलाई नबुझी, नचिनी यतिकै पछ्याइरहन सकिन्न । पुर्खाको विश्वासलाई अन्धविश्वासमा परिणत गर्ने मूल तत्व अज्ञानता हो र अज्ञानताको जड बेवास्तामा लुकेको हुन्छ ।**

पिण्ड त्यहाँ केरा अवश्य हुन्छ । महाअष्टमीको भोजमा काठमाडौँका नेवारहरू केराको पातमा एक करुवा चिउराको भोज खान्छन् । केराको महत्त्व र संस्कृतिको जड नबुझ्ने हो भने यी परम्पराहरू अन्धविश्वासको पोल्टोमा थुप्रन पुग्छन् ।

दारिम: पश्चिम एसिया दारिमको उद्‌गमस्थल हो । नेपालको डोल्पा जिल्लाको दक्षिणी भेकमा भेरी नदीको मलिलो फाँटमा दारिम वनमा समेत पाइन्छ । भूमध्यसागरीय परिवेशको प्रतिनिधित्व हुने यस क्षेत्रमा दारिमका अतिरिक्त जङ्गली जैतुन (ओलिभ) पनि भेटिएको छ । दारिमको फललाई अनार पनि भन्ने चलन छ । अनारको स्वाद र गुण दुवै रुचिकर हुन्छ । बिरामीबाट शिथिल भएको शरीरलाई दुरुस्त पार्न अनारको रस ज्यादै उपयोगी मानिन्छ ।

दुर्गा सप्तमी अर्थात् फूलपातीका दिन नवपत्रिका प्रवेश पूजा गर्दा श्री रक्तचण्डिका कालीको नामले दशैँमा दारिमको पूजा हुन्छ । 'अनार दाना दाँतका लहर खोलेर हाँसन' भन्ने पद्यांश सम्झँदा रक्तबीजको वध गर्दा माताकालीका राता दाँतको लहरलाई प्रतिविम्बित गर्ने अनारको वर्णन पूरा हुन्छ ।

धान: धानलाई धनको प्रतीक मानिन्छ । असारे वर्षाको पानी थापेर रोपेको धान झुल्न थालेपछि दशैँको चहलपहल शुरु हुन्छ । सीताको जन्मस्थल जनकपुरदेखि चन्दननाथको वासस्थान जुम्लासम्म धान लक्ष्मीको रूपमा पूजिन्छ । जुम्ली मार्सी विश्वमा सर्वोच्च ठाउँ (२७०० मिटर) मा धानको रूपमा परिचित छ । यस धानको रोपाइँको बेला चैतको १२ गतेसम्म घर नफर्केको जुम्लीलाई मरेको ठान्ने चलन धेरै पुरानो भएको छैन । यसरी नेपाली संस्कारमा धानको अत्यधिक महत्त्व र प्रयोग सिद्ध हुन्छ । तेत्तीसकोटि देवदेवीको पूजा गर्ने अक्षता चामल नै हो । यही अक्षतालाई शिरमा थापेर विजयादशमीको टीका मनाइन्छ । दही, अक्षता र अबीरको टीका थापेर मात्र शुभ साइतको काम हुन्छ ।

धानको उद्‌गमस्थल पनि एसिया हो । विश्वमा खपत हुने ६० प्रतिशतभन्दा बढी खाद्यपदार्थ धान, गहुँ र मकैबाट प्राप्त हुन्छ । यी तीनवटै वनस्पति 'ग्रामिनी' (graminae) नामक घाँस परिवारका हुन् । त्यसैले यस परिवारभित्रको विविधता घट्नु वा लोप हुनु खतराको सङ्केत हो । दक्षिण एसियाली देशमा ३०,००० भन्दा बढी थरीका धान फल्ने फलाउने परम्परा थियो भन्ने अभिलेख रहेको छ । तर आज यस क्षेत्रको ७५ प्रतिशत धानबाली केवल १० थरी (भेराइटी) का बीउमा सीमित हुन पुगेको छ । धानका जाति प्रजातिबारे लेखाजोखा गर्दा नेपाल कृषि अनुसन्धान परिषद्का वैज्ञानिकहरूले नेपालभित्रै पनि २००० थरिका धान विद्यमान रहेको आँकडा अघि सारेका छन् । कास्कीको एकै गाउँमा जातजातका ७० थरिका धान फल्ने तथ्य डा. मधुसूदन उपाध्याय, डा. बी.बी. शाही, डा. ज्ञानलाल श्रेष्ठ र अन्य वैज्ञानिकहरूको खोजबाट प्रमाणित भएको छ । खेती गरिने धानका अतिरिक्त जङ्गली धानका चार जात पनि नेपालका विभिन्न सिमसारमा पाइन्छन्, तर त्यस्ता क्षेत्र आज अतिक्रमणको चपेटामा परेका छन् । बेगनास ताल, (कास्की), अजिगरा ताल (रूपन्देही) र बुलबुले ताल (सुर्खेत) का जङ्गली धान कतिसम्म सुरक्षित रहलान् त्यो आँक्ने अवस्था छैन । जे होस् धानलाई हामी नेपालीहरू सबै धर्म र संस्कृतिमा धनको प्रतीक मान्छौँ । दशैँमा त यसको अझ विशिष्ट स्थान छ- धान्ये लक्ष्मीम् पूजयेत् ।

बेसार: नेपालमा व्यापक यो बुटी पनि फूलपातीको एक सामग्री हो । यो वनस्पतिको उद्‌गम र गुणको पहिचान दक्षिण एसियामा भएको हो । त्यसैले बेसारको औषधियुक्त गुणमा अमेरिकी एकाधिकार गर्ने प्रयासलाई भारतले चुनौति दिँदै आएको छ । यसको प्रयोग आदि अनादिकालदेखि यस क्षेत्रमा हुँदै आएको छ । बिना बेसारको पकवान खल्लो हुन्छ । यसमा घाउखटिरालाई पाक्न नदिने 'एन्टिसेप्टिक' गुण हुन्छ । नेपाली निघन्टुमा बेसार रक्त दोष, कुष्ठ, प्रमेह (धातुरोग), ब्रण (घाखटिरा), शोथ (सुन्निएको), पिनास, अरुचि, अपच, मोह र कण्डू (चिलाउने) रोगमा उपयोगी छ भन्ने उल्लेख छ । यी गुणहरूका कारणले नै यसले नेपाली जीवनमा

महत्त्वपूर्ण स्थान ओगटेको हो । यसैले बेसार र बेसारसँग सम्बन्धित हाम्रो बौद्धिक अधिकार (इन्टेलेक्च्यूअल प्रपर्टी राइट्स) कायम गर्नमा हाम्रो संस्कृतिले ठूलो बल प्रदान गर्न सक्छ। बेसारको पात देवीको पाउमा चढाएर मात्र हाम्रो सांस्कृतिक संस्कार पूरा हुँदैन । प्रयोगात्मक संस्कृतिको विकासतर्फ पनि ध्यान दिनु समयको माग हो ।

कर्कलो: हात्तीका कानजत्रा ठूल्ठूला पात हुने यो कर्कलो नेपालको पूर्वी हिमाली घाँचको वन जङ्गलको आसपासमा पाइन्छ । अनिकाल पर्दा यस्ता कन्दमूल पहिचान गर्न सक्षम बनाउने हेतुले हाम्रो चाडपर्वमा गिठ्ठा, भ्याकुर, तरुल आदिको प्रयोग भएको देखिन्छ। चाडपर्वमा यिनको प्रयोग गरेनौं भने भोलि त्यस्तै पर्दा यिनको बासस्थान कहाँ छ, यिनलाई कसरी चिन्ने र कसरी प्रयोग गर्ने भन्ने विधि पनि हामीसँग रहँदैन । पिँडालु-कर्कलोमा घाँटी कोक्याउने रासायनिक मणिहरू (क्रिष्टल) हुन्छन्। संस्कृतमा यसको नाम 'माणक' यही तत्वको कारण पर्न गएको हुन सक्छ । त्यो तत्त्वलाई पगाल्ने धेरै विधि छन्। यसको औषधीय प्रयोगबारे रक्त, पित्तमा हितकारी छ भन्ने उल्लेख पाउँदछौं ।

हलेदो: 'कर्चरके कालिकाम्' भनेर कर्चूर अर्थात् हलेदोको पात कालीलाई चढाइन्छ । यसको पात पनि झट्ट हेर्दा अदुवासँग मिल्दछ, तर हलेदोको गानो सेतो हुन्छ । भित्री भाग ज्यादै वास्नायुक्त हुने भएकोले अत्तर तथा सुगन्धका अन्य प्रकारहरू बनाउन यसको प्रयोग हुन्छ । यही गन्धकै कारण हुनसक्छ 'हलेदो भनेपछि कोट्याइरहन पर्दैन' भन्ने कथन स्थापित भएको । घरायसीरूपमा पनि यसको गानोको लेप लगाउने चलन छ । यसको पीठोमा रातो रंग मिसाएर सुमधुर टीका बनाउन सकिन्छ, तर कृत्रिम अर्थात् सिन्थेटिक अबीरले गर्दा हलेदो या कर्चूरको अबीर बजारबाट विस्थापित भएको छ ।

अशोक: शोकहरण गर्ने देवी 'शोकरहिताय'को पूजामा यसको प्रयोग हुन्छ। सानो कदको वृक्षको रूपमा फस्टाउने यो वनस्पतिमा चित्ताकर्षक गाढा रातो फूल फुल्दछ । भनिन्छ, पाउजु लगाएकी स्त्रीको पैतालाले यो वृक्ष छोएमा यसको फूल फक्रन्छ। सीताजीलाई रावणले हरेर अशोक वाटिकामा राखेको प्रसङ्ग रामायणमा खुल्दछ। त्यस्तै बुद्ध जन्मेका बेला मायादेवीको हातमा यही वृक्षको हाँगा थियो भन्ने लुम्बिनीको मूर्तिले देखाउँछ । अशोक वृक्ष हिमाली कछाडमा धेरथोर पाइन्छ । यसको प्रचुरता भने दक्षिण भारत र श्रीलङ्काको वनमा फेला पर्दछ। यसका फल, फूल, बीच र बोक्रा आउँ पर्दा, अल्सर हुँदा र पाठेघरका रोगादिमा विशेष गरेर प्रयोग गरिन्छ ।

अशोक फूलको सम्मोहनशील प्रकृतिलाई लिएर कामदेवको पाँच बाणमा यसको पनि प्रयोग भएको प्रसंग पाउँदछौं। जे भएता पनि शोकरहित अवस्था सिर्जना गर्नमा अशोकको वर्णन दशैंको लागि उचित हुन्छ ।

जयन्ती: यो एक वनस्पति हुँदाहुँदै पनि यसलाई जयन्तीबाहेक जया, विजया र अपराजिताजस्ता दुर्गाका विभिन्न नामले समेत सम्बोधन गरिन्छ । सानो-मसिनो आकृतिको यस वनस्पतिको फूल नियालेर हेर्दा पहेँलो फूलमा राता छिटाहरू छरिएका देखिन्छन् । जयन्तीको बोट डेढ मिटरसम्म अग्लो हुन्छ र पातहरू अमलाका पातझैं स-साना हुन्छन्। यो कोसे वनस्पतिमा पर्दछ। ढैंचाका नामले कृषि उत्पादनमा योगदान पुऱ्याउने सबै वनस्पति जयन्तीकै वर्गमा पर्दछन् । जयन्तीको बीउ उत्तेजना ल्याउने औषधि बनाउनमा प्रयोग हुन्छ। नेपाली निघन्टुअनुसार जयन्तीले वायु र गलगण्ड रोगलाई हटाउँदछ, कण्ठ शुद्ध गराउँछ । बेल: बेलको धार्मिक, आयुर्वेदिक एवं वातावरणीय महत्त्व नबुझ्दा 'कौवालाई बेल पाक्यो हर्ष न विस्मात'जस्ता उखानटुक्का जन्मन्छन् । शिवको पूजा र आराधनामा प्रयोग हुने बेलपत्र नवदुर्गा भवानीको नवौं शक्तिको रूपमा लिई नौ किसिमका पत्र अर्पण गर्दा अत्यधिक महत्त्वको वनस्पति मानिन्छ। नेपालका नेवार समुदाय आफ्ना कन्याको सबैभन्दा पहिले बेलसँग विवाह गरिदिने संस्कृति विशेष उल्लेखनीय छ ।

बेलफलको गुदीबाट ठण्डा सर्वत बन्दछ र यसलाई स्वास्थ्यवर्धक मानिन्छ । फलको कोठेबोक्राबाट प्राकृतिक रंग प्राप्त हुन्छ । बेल मधेश, तराई र चुरेका जङ्गलमा यत्रतत्र पाइन्छ तर यसको संरक्षणमा विशेष ध्यान पुग्न सकेको छैन । यसलाई मठ-मन्दिरको हातामा रोप्ने चलन भने अद्यावधि कायम छ ।

आश्विन शुक्ल सप्तमी अर्थात् फूलपातीको दिन नवपत्रिका प्रवेश पूजामा उपयोगी उपरोक्त नौ किसिमका वनस्पति सबै हाम्रा रैथाने बिरुवा हुन् र एसिया महाद्वीपको वास्तविक सम्पदाको रूपमा यिनलाई चयन गर्न सकिन्छ। यी वनस्पतिलाई अन्य वनस्पतिझैं केवल प्रकृतिको वरदानका रूपमा मात्र नलिई प्रकृति र मानवसभ्यताको संयुक्त प्रतीकका रूपमा समेत बुझ्नु आवश्यक हुन्छ। यही क्रममा दशैं जमरा राख्ने जौलाई मानवसभ्यताको इतिहासले पछ्याउने हो भने मानवजातिले सबैभन्दा पहिले खेती गर्दा प्रयोग भएको अन्न जौ हो भन्ने खुल्न आउँदछ । मानिसले खेती गर्न थालेको १० हजार वर्ष भयो भन्ने वैज्ञानिक आधारहरू छन् र तिनमा मिश्रका उत्खननबाट ५-७ हजार वर्ष पुराना जौका अवशेषहरू भेट्टाइएका छन् । मानव मात्रले सबभन्दा पहिले खेती गरेको यो अन्न कसरी हाम्रो जमरासम्म आइपुग्यो भन्ने अध्ययनको राम्रो विषय हुन सक्छ ।

अन्त्यमा, हाम्रा प्रत्येक चाडपर्वले हाम्रो सामु नेपालको जैविक विविधताको विशाल सम्पदा पस्कने गर्दछन्। कृषि र औषधोपचारका परम्परागत ज्ञान बौद्धिक सम्पदाका रूपमा स्थापित हुन्छन् । तिनका अतिरिक्त नृत्य, सङ्गीत, मूर्तिकला, वास्तुकलालगायत अनेकौं मूर्त सम्पदाहरू पनि संस्कृतिसँग जोडिएका छन्। यदि हामीले हाम्रै धर्म, संस्कृति, संस्कार र परम्परामा हाम्रो मूल सुनिश्चित गर्न सकेनौं भने हामी आफै विकृतिको शिकार बन्न पुग्दछौं। त्यसैले आजको पुस्ता आफ्ना छोराछोरी र सन्तानलाई आफ्नो संस्कृतिप्रति अनभिज्ञ नराखी उनीहरूको शिक्षा-दीक्षामा आफ्नो संस्कृतिलाई सम्पदाको रूपमा प्रस्तुत गर्न सक्षम होस् ।

**सबैमा दशैंको शुभकामना !**

**(साभार: हिमाल खबरपत्रिका)**

# आफ्नो हात आफैं हेरौं

**औंलाको दर्शन:**

यदि औंला भित्रतिर झुकेको छ भने व्यक्ति दुनियाँदारीमा अत्यन्तै चतुर हुन्छ तथा यस्तो व्यक्तिले हरेक कार्य सम्हालेर गर्न सक्दछ ।

तर यदि औंलाहरूको झुकाव बाहिरतिर छ भने यस्तो व्यक्तिको हृदय उदार हुन्छ । आफ्नो विचारको ऊ धनी हुन्छ र यदि जीवनमा कसैलाई आश्वासन दिएको छ भने आफ्नो कथनलाई अन्तिम समयसम्म निभाउने कोशिश गर्दछ । यदि औंलाहरू जरुरतभन्दा ज्यादा बाहिर झुकेको छ भने व्यक्ति लापरवाही हुन्छ । यदि औंलाहरू टेढोमेढो र बेडौल छ भने व्यक्ति अपराधी वर्गको हुन्छ तथा अपराधपूर्ण कार्यहरूमा नै उसको रुचि हुन्छ ।

जसको औंला मोटो र फुलेको हुन्छ, त्यो निर्धनताको सूचक मानिन्छ । यस्तो व्यक्तिले जति पनि उपार्जित गर्दछ, त्यसभन्दा धेरै खर्च गर्दछ ।

औंला यदि चेप्टो छ भने व्यक्ति सेवा कार्यमा सफल हुन्छ । जीवनमा उच्च स्तरमा तथा अधिकारी पदमा पुगेर प्रशंसा आर्जन गर्दछ ।

जसको औंला सोझो हुन्छ, त्यो भाग्यशाली हुन्छ तथा समाजमा उसलाई विशेष सम्मान प्राप्त हुन्छ ।

सबै औंलाहरू यदि गठिलो एवं उबडखाबड छ भने व्यक्ति विचारशील एवं अध्ययनप्रिय हुन्छ ।

यदि औंलाहरूमा गाँठा धेरै विकसित भएका छन् भने यस्तो व्यक्ति प्रतिभावान् तथा चिन्तक हुन्छ । उसको प्रत्येक कार्य विशेष रूपमा व्यवस्थित हुन्छ ।

यदि यी गाँठाहरू अत्यधिक उठेका छन् भने यस्तो व्यक्ति जीवनमा निराशावादी हुन्छ तथा अकाल मृत्युलाई प्राप्त हुन्छ ।

यदि यी गाँठाहरू चिल्लो हुन्छ भने व्यक्ति जरुरतभन्दा धेरै भावुक हुन्छ । यदि गाँठारहित औंला छ भने व्यक्ति दार्शनिक हुन्छ ।

**औंलामा निशान:**

औंलामा पाइने निशान पनि हस्तरेखाका लागि धेरै महत्त्वपूर्ण हुन्छ । अपराध शास्त्रमा यी चिन्हहरूको धेरै महत्त्व मानिन्छ । यी चिन्हको माध्यमबाट व्यक्तिको चरित्र, उसको मनोविज्ञान आदिलाई राम्रोसँग जान्न सकिन्छ । यी चिन्हहरूको माध्यमबाट नै हामी उसको व्यक्तित्वलाई राम्रोसँग सम्झन सक्दछौं । यी चिन्हहरू निम्न प्रकारका छन् :

शंख: औंलाहरूको माथिल्लो भागमा यदि यो चिन्ह देखिन्छ भने यस्तो व्यक्ति मानसिक रूपबाट अत्यन्त समर्थ एवं श्रेष्ठ हुन्छ । यस्तो व्यक्ति विपरीत परिस्थितिमा पनि उन्नति गरिरहन्छ तथा परिस्थितिहरूमाथि विजय प्राप्त गर्दछ साथसाथै परिस्थितिअनुसार आफूलाई ढाल्ने क्षमता राख्दछ । यस्तो व्यक्ति जीवनमा आफ्नो प्रयत्नबाट सफल हुन्छ तर वृद्धावस्थामा यस्तो व्यक्ति हृदय रोगको शिकार भएको पाइन्छ ।

तम्बू: कुनै व्यक्तिको औंलाका भागहरूमा तम्बूवत चिन्ह देखिन्छ । यस्तो व्यक्ति अधिकतर सहृदय एवं कलाकार हुन्छ र आफ्नो कलाको माध्यमबाट धेरै उच्च उठ्दछ । तर यो कुरा पनि सही हो कि यस्तो व्यक्ति भावुक हुन्छ र समाजमा यिनीहरूसँग अनुचित लाभ उठाइन्छ । मानसिक दृष्टिबाट यस्तो व्यक्ति असन्तुलित हुन्छ र यस्तो व्यक्तिको गृहस्थ जीवन लगभग दु:खमयजस्तै हुन्छ ।

चक्र: औंलाहरूमा चक्रको निशान पाइनु शुभ मानिन्छ । यस्तो व्यक्ति आफ्नो विचारमा स्वतन्त्र हुन्छ तथा यस्तो व्यक्तिको प्रत्येक कार्यमा मौलिकता देखिन्छ । विवेकको बलमा यस्तो व्यक्ति समाजमा सम्माननीय स्थान पनि प्राप्त गर्दछ तथा यस्तो व्यक्ति रूढीवादी, अज्ञान र पुरातन सोचबाट टाढा रहन्छ ।

मेहराब (Arch): जसको पोरुहरूमा मेहराबको चिन्ह पाइन्छ त्यस्तो व्यक्ति अधिकतर अल्छी, शंकालु तथा सन्देहशील प्रकृतिको हुन्छ । यस्तो व्यक्तिको न त आफूले आफूमाथि नै विश्वास हुन्छ न यस्तोले अरुलाई नै भरोसा गर्दछ । यस्तो व्यक्ति आफ्नो चारैतिर भ्रमको वातावरण बनाइराख्दछ । रहस्यमय कार्यहरूमा तथा गुप्तचरीसँग सम्बन्धित कार्यहरूमा यस्तो व्यक्तिले विशेष सफलता प्राप्त गर्दछ ।

त्रिभुज: त्रिभुजको चिन्हले व्यक्तिलाई रहस्यमय बनाउँछ । यस्तो व्यक्ति योगाभ्यासद्वारा आफ्नो शरीरलाई सुगठित बनाउन समर्थ हुन्छ । साथै यस्तो व्यक्ति एकान्तप्रेमी तथा रुढीवादी पनि देखिन्छ । यस्तो व्यक्तिको मनमा जुन कुरा उठ्छ त्यसलाई यस्तो व्यक्ति सहज छोड्दैन ।

तारा: जुन व्यक्तिको औंलामा तारा वा क्रसको चिन्ह देखिन्छ त्यस्तो व्यक्ति प्रबल भाग्यवादी एवं भाग्यशाली हुन्छ, यस्तो व्यक्तिलाई जीवनमा कैयौंपटक अप्रत्याशित रूपबाट धनलाभ हुन्छ । आर्थिक दृष्टिबाट व्यक्ति जीवनमा सुखी रहन्छ ।

कंदुक: औंलाको पोरुमा यदि गोलो निशान वा कंदुक चिन्ह देखिन्छ भने त्यो व्यक्ति आदर्शप्रेमी वा आदर्शमित्र मानिन्छ । एकातिर जहाँ यस्तो व्यक्तिको रुचि भोगतर्फ हुन्छ भने अर्कोतिर वैराग्यतिर पनि यस्तो व्यक्तिको झुकाव रहन्छ । मानसिकरूपमा यस्तो व्यक्ति अस्थिर हुन्छ तथा कुनै पनि कार्यलाई पूर्णताका साथ सम्पन्न गर्नु यस्तो व्यक्तिको स्वभावमा हुँदैन ।

जालो: जालोयुक्त औंला यस कुराको सूचक मानिन्छ कि व्यक्तिको जीवनमा जरुरतभन्दा धेरै बाधाहरू एवं कठिनाइहरू आउँछन् । यद्यपि यस्तो व्यक्तिको जीवनशक्ति दृढ हुन्छ तथा आफ्नो इच्छाशक्तिको बलमा यस्तो व्यक्ति संकटहरूमा पनि सकुशल रहन सक्छ तर पनि यस्तो व्यक्तिको जीवनमा आराम तथा सुख कम नै रहन्छ । अधिकरूपमा अपराधवृत्तिका व्यक्तिहरू तथा डाँकाहरूमा यस्तो चिन्ह सजिलैसँग देख्न सकिन्छ ।

चतुर्भुज: औंलाको पोरुमा वर्ग वा चतुर्भुज चिन्ह देखिनुको अर्थ यस्तो व्यक्ति जीवनमा परिश्रमी छ र आफ्नो परिश्रम तथा उद्यमको बलमा लक्ष्मीलाई आफ्नो वशमा राख्ने सामर्थ्य राख्दछ । यस्तो व्यक्ति आर्थिक दृष्टिबाट पूर्ण सम्पन्न तथा सुखी रहन्छ ।

यदि कुनै व्यक्तिका औंलाहरूमा एकभन्दा अधिक चिन्ह देखिन्छन् भने त्यस व्यक्तिमा त्यससँग सम्बन्धित फलादेशहरूको मिश्रण हो भन्ने मान्नुपर्दछ ।

क्रमश:

(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन् । सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ ।)

# लौ ! गुरुदेव त शंखबाट पो निस्कनुभयो

पालपा जिल्लाको अनकंटार पहाडमा जन्मेकी ममा आध्यात्मिक ज्ञान नभएता पनि ६ वर्षको उमेरदेखि नै व्रत बस्ने, तुलसीको पूजा गर्ने, गाईको पूजा गर्ने बानी भने मेरो थियो । १२/१४ वर्ष पुग्दा निराहार व्रत बस्ने, देवीको पाठ-पूजा, गाई-तुलसीको पूजा गर्ने गर्दथेँ ।

धार्मिक परिवारमा मेरो विवाह भयो । यसपछि पनि अनुकूलताले गर्दा दैनिक पूजाआजा चल्दथ्यो । एकपटक कामको सिलसिलामा बाहिर हिँड्नुपर्ने समय आयो । विधि-विधान नजाने पनि बाहिर रहँदा पनि धूप, बत्ती, फूल, चन्दन, अक्षताबाट पूजा गरिरहन्थेँ, मनमा आनन्द लिन्थेँ ।

सन् १९९७ सालको लक्ष्मीपूजाको दिन परमपूज्य सदगुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजसँग दीक्षा लिने सौभाग्य पाएँ । त्यसै दिन महालक्ष्मी साधना गर्ने सौभाग्य पनि पाएँ । सोही दिन नै मैले सबै कुरा प्राप्त गरेको दिन साबित भयो । त्यो दिन जीवनको सबैभन्दा खुशीको दिन थियो किनकि उक्त दिनदेखि मलाई परमपूज्य सद्गुरुदेवसँग जोडिने मौका प्राप्त भयो । जीवनमा केही नभए पनि सबै कुरा भएको महसुस भयो ।

त्यसै दिनदेखि जीवनका सबै दु:ख, कष्ट, सुख, खुशीहरू पादुकामा बिसाउन थालेँ । गुरु पिता र शिष्य शिशु भएको हुँदा जीवनको दौडमा आइपरेका दु:ख, कष्ट, खुशी सबै गुरुदेवलाई नै अर्पण गर्दै अगाडि बढेँ । जीवनमा धेरै-धेरै संकट आइपर्‍यो तर पनि गुरुदेवसँग भित्र हृदयदेखि नै प्रार्थना गर्दथेँ, रुन्थेँ केही समयभित्रै सपनामा दर्शन दिनुहुन्थ्यो, मार्ग-निर्देशन गर्नुहुन्थ्यो । सोहीअनुसार गर्दै जाँदा संकट टर्ने र कार्य पनि राम्रो हुने गर्दथ्यो ।

२०६४ सालको कुरा हो । चार-पाँच महिनादेखि परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई सपनामा दर्शन पाइनँ । दुई-तीन महिनादेखि बेचैनी, छट्पटाहट भइरहेको थियो । सदैव गुरुदेवसँग प्रार्थना गर्दथेँ । मबाट के गल्ती भयो प्रभु, मेरो भावमा कमी भयो कि, क्षमा गर्नुहोस्, दर्शन पाऊँ प्रभु भन्दै पूजा, जप, आरती गर्दा र सुत्दा, उठ्दा प्रार्थना गरिरहन्थेँ ।

२०६४ आश्विन १५ वा १८ गते तिरको कुरा हो । सदाझैं दैनिक आरतीको समय आयो । आरती गरेँ तर भिन्नै प्रकारले । दायाँ हातमा आरती घुमिरह्यो, बायाँ हातमा घण्टी बजिरह्यो । दुवै आँखाबाट बलिन्द्रधारा आँसु बगिरह्यो तर आरतीको शब्द निस्किन सकेन । दु:खी र भिखारी आँखाले गुरुदेवलाई हेरी नै रहेँ । यो क्रम आधा घण्टासम्म अटुट भइरह्यो । त्यसपछि गुरुदेवहरू र देवीदेवताहरूलाई आरती दर्शन गराएर भुइँमा राखेँ ।

त्यसपछि माला लिएर परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निलिखेश्वरानन्द महाराजको मंत्र जप गर्न लागेँ । तर किन हो आँसु पनि रोकिएन, मंत्र पनि रोकिएन, माला पनि अगाडि घुम्नै सकेन । त्यतिबेला मलाई मेरो मुटु नै फुटेर केही चिज निस्किँदै छ जस्तो लाग्यो । ४, ५ मिनेटसम्म दुवै हात जोडेँ, माला जोडिएको हातभित्रै थियो । शरीर र मुटु केही कम्पित भइरहेको थियो । त्यसपछि केही शान्ति भए जस्तो अनुभव भयो । फेरि जप गर्न लागेँ । एक माला जप पूरा गरी दोस्रो माला जप गर्दै थिएँ, मेरा दुवै आँखा बन्द थिए, जप चलिरहेको थियो, मेरो दायाँपट्टि अगाडि पूर्व फर्काएर राखेको दाहिने शंख (दक्षिणावर्ती शंख) को वरिपरि प्रकाशजस्तो तेज र शंखको भित्रबाट सेतो, अत्यन्तै सेतो धोती-कुर्ता धारण गर्नुभएको, देब्रे काँधमा रातो गम्छा राख्नुभएको, दायाँ हातले धोतीको चुना समात्नु भएको बिस्तारै शंखमाथि उभिनुभयो र यसो हात उठाएर उत्तरपूर्वको कुनातिर लाग्नुभयो । त्यतिबेला मलाई लागिरहेको थियो कि जपमाला पूरा गरेर गुरुदेवको पाउमै दर्शन गरूँ । यसैले छिट्छिटो जप गर्दै थिएँ, गुरुदेव पूर्व-उत्तरतिर लाग्नुभयो । माला सकाएर आँखा खोल्दा त केवल मेरो अगाडि दक्षिणावर्ती शंख मात्र थियो । प्रभुको दर्शन पाएको हुनाले खुशीले गद्गद् भएँ । पाउमा दर्शन गर्न नपाएको हुनाले पछुतो चाहिँ लागेको थियो ।

यसरी निसंकोच भन्न सकिन्छ कि हामी सबै साधक-साधिका, भक्तजनहरूले आ-आफ्नो घर, व्यापार, व्यवसाय स्थल, कार्यालयहरू आदिमा आश्रमबाट उपलब्ध प्राण-प्रतिष्ठायुक्त देवदुर्लभ सामग्रीहरू स्थापना गर्न सकिएमा हामीलाई धेरै उपलब्धिहरू हासिल हुनेछ । त्यसैले यस प्रकारका सामग्रीहरूका लागि सिद्धाश्रम शक्ति केन्द्रमा शीघ्र सम्पर्क राखी सद्गुरुदेवहरूको आशीर्वादको भागी बन्न आह्वान गर्दछु ।

**– ज्ञानु रेग्मी**
**कुलेश्वर, काठमाडौँ ।**

# रहस्यमय पितृलोक

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौँ । कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ । यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ । यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ ।**

....ठाउँमा पुग्यौँ । अत्यन्त मनमोहक चौरजस्तो थियो । तर ठ्याक्कै दुबोले भरिएको चौरजस्तो देखिएता पनि त्यो दुबोचाहिँ थिएन । मलाई अचम्म लागिरहेको थियो कि पृथ्वीतटका हरेक कुरासँग मिल्दाजुल्दा भएता पनि पृथ्वीतटका नामसँग सम्बन्धित नहुने रहेछन् । अत्यन्त सजिएको चौर थियो त्यो । वरिपरी बगैँचाजस्ता दृश्यहरू थिए । त्यसैगरी विशेष आसनजस्ता लाग्ने कुराहरू स्थापित गरिएका थिए । तर प्रत्येक आसनको वरिपरी विभिन्न सङ्केतहरूले परिक्रमा गरिरहेका जस्ता देखिन्थे । कुनै सङ्केत स्वस्तिक आकारजस्ता, कुनै सङ्केत त्रिशूलजस्ता थिए । कुनै सङ्केत चक्रजस्तो त कुनै सङ्केत त्रिकोणजस्ता देखिन्थे । यस्ता विविध प्रकारका सङ्केतहरूले सूर्यलाई ग्रहहरूले परिक्रमा गरेजस्तो घुमिरहने रहेछन्, केवल आफ्नै गतिमा । नयाँ ठाउँ भएको हुनाले म अति सावधान थिएँ । सानो गल्तीले ठूलो दु:ख एवं विपत्ति झेल्नुपर्ने हुन्छ भनेर सचेत थिएँ ।

मेरो सचेतता देखेर पितृदेव अति खुशी हुनुभयो । हरक्षण मैले उहाँको सङ्केतलाई पछ्याइरहेको थिएँ । त्यहाँ वार्तालाप केवल सङ्केतको आधारमा गरिँदोरहेछ । कारण, उक्त ठाउँ अत्यन्त दिव्यतम नै हुने रहेछ । आसनमा अदृश्यरूपमा पितृलोकबाट आएका माथिल्लो तहका आत्मा हुन्छन्, उहाँहरू नै विराजमान हुनुहुँदोरहेछ । वरिपरी घुमिरहेका सङ्केतहरू उक्त महान् आत्माले प्राप्त गरेका तथा सिद्ध गरेका शक्ति हुने रहेछन् । एउटै सङ्केतभित्र हजारौँ सिद्धि छिपेर रहेका हुने रहेछन् । यसरी प्राप्त गरेका सिद्धि, महासिद्धि तथा परमसिद्धिहरू उहाँहरूले (दिव्य पितृ आत्माहरूले) लुकाएर राख्न खोजेता पनि लुकाउन सकिँदो रहेनछ । स्वत: नै औरा शक्तिजस्तो बाहिर निस्कने रहेछ । तपस्यामा लीन (मग्न) हुँदै जाँदा यस्ता प्रकारका शक्तिहरू निस्कँदै, प्रकट हुँदै परिक्रमा गर्ने रहेछन् ।

सामान्यरूपबाट हेर्दा पितृदेव हामीलाई सानोजस्तो लाग्ने रहेछ । देवीदेवताभन्दा पितृहरू सानाजस्ता लाग्ने रहेछ । यथार्थमा भन्नुपर्दा उच्चकोटिका पितृदेवहरू देवताभन्दा पनि माथिल्लो तहमा रहन सक्ने प्रकृतिका हुने रहेछन् । त्यसो भनेर देवताभन्दा पितृ ठूला हुन् भन्न खोजेको चाहिँ होइन । देवलोक प्राप्तिपश्चात् देवीदेवताहरूबाट आफूसँग भएका सिद्धि, शक्तिलाई भोग गर्ने, आफ्ना भक्तहरूलाई आशीर्वाद दिने आदि कर्म हुने हुनाले तपस्या बढाउने प्रक्रियाभन्दा पनि घटाउने प्रक्रिया बढी हुने रहेछ । तर पितृदेव लोक भन्नाले पितृहरूले तपस्या गरी आफ्नो तप शक्ति बढाउन पाउने ठाउँ रहेछ । उच्चकोटिका सिद्धि र शक्ति प्राप्त भएपछि देवलोकभन्दा माथिल्लो लोक प्राप्त हुन सक्ने रहेछ । तर पनि देवलोकलाई हटाउन चाहिँ नमिल्ने रहेछ । पितृदेवहरू देवलोक पनि जान पाउने रहेछन् । पितृलोकमा पनि आउन पाउने रहेछन् । यस्तो दोहोरो प्रकारको सुविधा लिन्छु भनेर लिन पाइँदैन जबसम्म देवलोक प्राप्ति हुँदैन । यसरी सामान्य रूपबाट हेर्दा पितृदेवहरू देवताभन्दा साना भएर पनि ठूला बन्ने रहेछन् । देवताहरू ठूला भएर पनि सानाजस्ता हुने रहेछन् ।

वास्तवमा तपस्याले आत्मालाई महानता प्रदान गर्ने रहेछ र महान् आत्मा बन्ने रहेछ । ऊ नै महात्मा बन्ने रहेछ । जो महात्मा बन्न सक्छ, उसैभित्रबाट ऋषभ पद प्राप्ति हुने रहेछ । आत्माको विकसित अवस्था महात्मा र महात्माको

विकसित अवस्था परम आत्मा रहेछ । एक महात्माको जन्म हुँदा लाखौँलाख आत्मा लय हुँदा रहेछन् । यहाँ म यसकारणले व्याख्या गर्ने धुनमा छु कि यसको प्रभावबाट हामीमा तपस्याप्रति उत्प्रेरणा जागोस् । एउटा साधारण आत्माको ध्येय देवताभन्दा पनि माथि-माथि हुँदै जाओस् भन्ने हो । यस्ता विविध प्रकारका तपस्याका महत्त्वबारे मैले जान्न पाउँदा, बुझ्न पाउँदा अत्यन्त आह्लादित हुन पुगेँ । आफूले आफैलाई धन्यवाद दिएँ । यस्ता प्रकारका रहस्य प्राप्त भएकोमा कारणरूपी गुरुतत्त्वलाई पनि मेरो कोटिकोटि प्रणाम ! म त गुरुतत्त्वको महामहिमा गाउन पनि असमर्थ छु, बताउन पनि असमर्थ छु । कुनै पनि अवस्थाबाट अलग पार्न नै नसकिने गुरुतत्त्वबाट म कसरी अलग हुन सक्छु ।

यस्तो प्रकारको दिव्यतम स्थानमा रही तपस्यामा लीन हुनु भएका एकजना तपोनिष्ठ महान् आत्माको तपस्या पूर्ण गरी प्रकट हुने बेला आइसकेको रहेछ । त्यसैले, मलाई पितृदेवले नमस्कार मुद्रामा रहिरहनको लागि सङ्केत गर्नुभएको मात्र के थियो मैले त्यसै गर्न थालेँ । एकाएक त्यहाँ वरिपरी परिक्रमा गरिरहेका सङ्केतहरू सहस्र (लाखौँलाख) रूपमा विभक्त भए र उक्त ठाउँमा हराए । त्यसपछि एकछिनको लागि वातावरण स्तब्ध भयो । तुरुन्त नै त्यहाँ उज्यालो प्रकाश व्याप्त भयो जुन प्रकाश लाखौँ सूर्यसमान भएको हुनाले हेर्न सक्ने भन्ने त कुरै आएन । म नमस्कार मुद्रामा रही ध्यान गरी बसेँ । ध्यानमा बस्दा पनि उज्यालो प्रकाशको प्रभाव परिरहेको थियो । तर अचम्मको कुरा चाहिँ के भने आँखा बन्द हुँदा पनि सम्पूर्ण दृश्यहरू सजिलै देख्न सकिरहेको थिएँ । बिजुली चम्कँदा जस्तो हुन्छ त्यस्तै प्रकारको अवस्था भइरह्यो । एउटा सूर्यजस्तो जाज्वल्यमान स्वरूपमा चक्रको (चक्काजस्तो) उपस्थिति हुन लाग्यो । त्यसपछि उक्त चक्र बदलिएर एकजना व्यक्तिको रूपमा रूपान्तरण भयो ।

उहाँको दाह्रीजुङ्गा लामा सेतै फुलेका थिए । यति कि हात गोडाका सम्पूर्ण रौँहरू पनि सेतै फुलेका थिए । उहाँ आफ्नो पूर्ण स्वरूपमा आइसकेपछि मलाई निर्देशित गर्दै परिचय माग्नुभयो । हुन त उहाँलाई थाहा नहुने भन्ने त कुरै भएन तर पनि एउटा बहानामा रहस्य लुकेको हुने रहेछ । मैले मेरो परिचय दुई लाइनको श्लोकमा व्यक्त गरेँ । उक्त श्लोक मबाट स्वत: नै स्फुरित भयो । उक्त श्लोक म स्थूल शरीरमा वाचन गर्न, लेख्न असमर्थ छु । कारण, वर्णमाला मिल्दैन र शरीरमा हुँदा (स्थूल शरीर) जिब्रोको भागबाट उच्चारण गर्न सकिँदैन । त्यसपछि  उहाँले मलाई अङ्गालो मार्नुभयो । किन हो मैले बुझ्न सकिन । तर मलाई कताकता मित्रवत् भाव चाहिँ आभास भइरहेको थियो । मलाई अत्यधिक खुशी र आनन्द आइरहेको थियो । त्यसपछि उहाँले कमण्डलुजस्तो सृष्टि गरी हातमा लिनुभयो । त्यसपछि के मंत्र हो वाचन गर्नुभयो । उक्त मंत्रको उहाँले वाचन गर्दा मेरो शरीर (सूक्ष्म) मा करेन्ट महसुस भइरहेको थियो । उक्त मंत्र सुन्दा संस्कृतजस्तै लाग्थ्यो तर मैले बुझ्न सकिन । समय आएपछि अवश्य बुझ्न पाइएला भनेर मैले सुनी मात्र रहेँ । उक्त मंत्र बुझे पनि, नबुझे पनि त्यसको प्रभाव भने ममा परिरहेको थियो । उहाँ आफ्नै रफ्तारमा मंत्र वाचन गर्दै गइरहनु भएको थियो । वातावरण स्तब्ध थियो । शीतल-शीतल भएजस्तो, गर्मी-गर्मी भएजस्तो, कस्तो-कस्तो आभास, व्याख्या नै गर्न नसकिने खालको अनुभव भयो मलाई । त्यहाँको वातावरण शायद पृथ्वीतटमा नै पाउन मुश्किल पर्ला । त्यहाँ कुनै प्रकारको भय थिएन । एकछिनपछि पुष्पवृष्टि भयो । अत्यन्त सूक्ष्म जलवर्षा भयो । क्षणभरमा नै त्यहाँ अत्यन्त मनोहर दृश्य देखा पर्न थाल्यो । उहाँले मंत्र वाचन सकाउना साथ कमण्डलुजस्तोबाट जल अभिमन्त्रित गरेर अगाडिपट्टि छर्कनुभयो । त्यहाँ तुरुन्त एउटा महल (घरजस्तो) सृष्टि भयो । उक्त घरमा सबै कुरा थिए । विभिन्न शृङ्गारिक सामानहरूले घर सजिएको थियो । घरको दायाँपट्टि र बायाँपट्टि आकर्षक बगैँचा तुरुन्त निर्माण भए । त्यसपछि घरको अगाडिपट्टि सुनौलो रङ्गको गेट निर्माण भयो । त्यहाँ एकपछि अर्को गर्दै निर्माण हुँदै गइराखेको दृश्य देख्दा यस्तो लाग्दथ्यो कि त्यहाँ सूक्ष्मभन्दा अति सूक्ष्मरूपमा कैयौँ कामदारहरूले निर्माण कार्य गरिरहेका छन्– अत्यन्त शीघ्र गतिमा । वास्तवमा सिद्धि शक्तिभित्र कैयौँ रहस्यमय कुराहरू छिपेर रहेका हुने रहेछन् जसलाई बुझ्नको लागि, थाहा पाउनको लागि पुन: तपस्याको जरुरत पर्दछ । ब्रह्माण्ड स्वयं रहस्यमय भएको हुनाले यसमा अवस्थित सिद्धि शक्ति पनि रहस्यमय नै हुँदा रहेछन् । यस्ता दिव्य शक्ति प्राप्त गर्नको लागि तपस्वीहरू पनि रहस्यमयी नै हुनुपर्ने रहेछ । जब त्यहाँ निर्माण कार्य सकियो त्यहाँ अनायास नै विभिन्न खालका ध्वनिहरू गुञ्जरित हुन थाले । त्यसपछि उहाँले आह्वान गर्न थाल्नुभयो । अचम्मको कुरा के भने उहाँले आह्वान गर्दा शरीर अदृश्य भएर ध्वनि मात्र सुनिन्थ्यो । जब आह्वान गर्नुहुन्थ्यो एकप्रकारको शक्ति आएजस्तो भान हुन्थ्यो । मैले त्यहाँ के हुन लागिरहेको छ भन्ने चाहिँ बुझेँ तर वास्तविक रूपमा के हुँदैछ, त्यो चाहिँ थाहा पाउन सकिन । लगभग अन्तमा उहाँले के भनेर आह्वान गर्नुभयो त्यो शब्द मैले बुझ्न सकिन तर एकप्रकारको शक्तिले मलाई झ्वाम्म छोपेजस्तो भयो । ब्यूँझँदा म अर्कै

ठाउँमा एउटा आसनमा थिएँ। वरिपरी विभिन्न भेषभूषामा विभिन्न अनुहारका दिव्यात्माहरू विराजमान हुनुहुन्थ्यो। मानौं त्यहाँ देवसभा हुन लागेजस्तो देखिन्थ्यो। त्यो अचम्मको हुल थियो। कोही पनि बोलेका थिएनन्। तर प्रत्येकका भित्री कुराहरू स्वतः नै थाहा हुन्थ्यो। त्यहाँ प्रत्येक आसनमा रहने दिव्यात्माहरू तप शक्तिको आधारमा विराजमान हुनुहुन्थ्यो। जब सबै जना (दिव्यात्मा) प्रतीक्षा गरी बसिरहनु भएको थियो, उहाँ (महात्मा योगी जसले मलाई अङ्गालो मार्नुभएको थियो) आउनुभयो (प्रकट हुनुभयो) र आफ्नो आसनमा विराजमान हुनुभयो। त्यहाँ भेला हुनुको रहस्यबारे उहाँले व्याख्या गर्न थाल्नुभयो– "आज (यस क्षणबाट) म अर्को लोकमा प्रवेश गर्दैछु। म अर्को लोकमा प्रवेश गर्नुभन्दा अगाडि एउटा यस्तो दिव्य तान्त्रिक शक्ति छोडेर जानुपर्ने हुन्छ जुन केवल यस लोक (पितृदेवलोक) मा मात्र लागू हुन्छ। म यस लोकबाट अर्को लोकमा जाँदा मसँग रहेको यो शक्ति यहाँ जिम्मा लगाउनुपर्ने हुन्छ र त्यसकारण तपाईंहरूमध्येबाट कुनै एक दिव्यात्मालाई यो शक्ति जिम्मा लगाउँदैछु जसबाट मेरो शक्तिको दुरूपयोग पनि नहोस् र मेरो च्यानलका पितृहरूलाई पनि माथि तान्न मद्दत पुगोस्।"

मलाई यहाँको यस घटनाको सानोभन्दा सानो कुरा पनि राख्न मन लागिरहेको छ ताकि यसबाट साधनामा लागिरहनु भएका साधक साधिकाहरूलाई सूक्ष्मतामा पुग्न मद्दत पुगोस्। सामान्यरूपबाट लिंदा यो कल्पनाजस्तो लाग्न सक्छ, अहं प्रदर्शन गरेजस्तो लाग्न सक्छ। तर पनि सत्य एकदिन सत्य भएर नै छाड्छ। मलाई यहींनिर (यहाँ आएर) एउटा कुरा याद आयो कि तान्त्रिक लाइनबाट मोक्ष हुँदैन भन्ने कुरा। वास्तवमा कुरा के रहेछ भने जसले असङ्ख्य सिद्धि शक्ति प्राप्त गरेको छ उसलाई छाड्न बडो गाह्रो हुनेरहेछ। कसैलाई उक्त शक्ति जिम्मा नलगाउन्जेल त्यस योनिबाट छुटकारा मिल्दो रहेनछ। कारण, उक्त दिव्य शक्ति जथाभावी छाड्न मिल्दो रहेनछ। चङ्गा जहाँ गए पनि लट्टाइले तान्नासाथ आउन परेजस्तै जतिसुकै परम तेजस्वी भएता पनि सिद्धि र शक्तिले खिचेर पहिलाकै लोकमा ल्याउने रहेछ। त्यतिबेला कसैलाई शक्ति, सिद्धि सुम्पन पाएको छ भने सजिलै माथिल्लो लोक प्राप्त हुने रहेछ। होइन भने योग्य पात्रताको अभावमा एउटै लोकमा पनि हजारौं-हजार वर्षसम्म रहनुपर्ने हुँदोरहेछ। जसका गुरु छन् उसले चाहिँ यस्तो झञ्झट भोग्नपर्ने हुँदो रहेनछ। कारण, योग्य पात्र भेट्टाएको खण्डमा जिम्मा लगाउन मिल्ने र नभेट्टाएको खण्डमा गुरुमा जिम्मा लगाएर अनेकौं लोकमा जान मिल्ने हुँदोरहेछ। उक्त महात्मा योगी परम तेजस्वी भएता पनि यो समस्याले गर्दा हजारौं वर्षसम्म त्यहाँ रहन बाध्य हुनुभएको रहेछ। मलाई यतिबेला बडो गर्वसाथ भन्न मन लाग्छ कि म श्री श्री महायोगी गुरु गोरखनाथको शिष्य हुँ, परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको शिष्य हुँ। मलाई उहाँले (महात्मा योगी) अङ्गालो मारेको रहस्य बल्ल यहाँ आएर बुझें कि उहाँको यो समस्या आज हल हुँदैछ। वास्तवमा कुनै समयमा उहाँले गुरु प्राप्त गरेर पनि गुमाउनु भएको रहेछ। जुन कुरो हजारौं वर्षपछि आएर उहाँले गुरुको मर्म बुझ्दै हुनुहुन्छ। उहाँसँग स्थित समस्त शक्ति र सिद्धि मेरो पितृगुरुदेवमार्फत् म अनि म मार्फत् मेरा गुरुहरूमा अर्पण (जिम्मा) गर्दै हुनुहुँदोरहेछ। कैयौं शक्तिशाली महापुरुष पनि गुरुको अभावमा कति लाचार बन्नुपर्ने हुँदोरहेछ। क्षणभरमा अरूको सहारा (सहयोग) लिनुपर्ने हुँदोरहेछ। आफ्नो शिष्यमा घमण्ड र अहंकार नआओस् भनेर परमपूज्य गुरुदेवले मलाई घटना, उपघटनामा सरीक (सहभागी) गराउँदै लग्नुभएको छ। गुरुदेवको यस्तो कृपा ममाथि बर्सँदा म यति भावविभोर छु कि कसरी व्याख्या गरूँ! जो महात्मा योगी हुनुहुन्छ वास्तवमा उहाँ हजारौं वर्षअगाडि मेरो मित्र हुनुहुँदोरहेछ। यस विराट् ब्रह्माण्डमा गुरुको महिमा कति रहेछ, अलग भएर पनि हुन नसक्ने र पुनः जोडिनु पर्ने हुँदोरहेछ। सानो गल्तीले हजारौं वर्ष पछाडि पर्नुपर्ने हुँदोरहेछ। जससँग शक्ति छ, प्रकृतिबाट नै प्राप्त हुने रहेछ तर प्रकृतिलाई नै जिम्मा लगाउन सकिएन भने मोक्ष प्राप्त नहुने रहेछ। जसले त्यागको अभ्यास गरेको छ, उसमा मात्र यो गुण प्राप्त हुनेछ। यी कुरालाई यहीं राखौं। ती महात्माले ममार्फत् गुरुमा अर्पण गरेको शक्ति र सिद्धि पितृगुरुदेवको जिम्मा लगाउन सफल हुनुभयो, केवल गुरुको कृपाले। त्यसपछि उहाँ (महात्मा) अर्के लोकमा जानुभन्दा पहिला मलाई उहाँको आह्वान विद्या मंत्र प्रदान गर्नुभयो जसबाट मलाई त्यहाँ पुग्नको लागि मद्दत पुगोस्। त्यसपछि उहाँ त्यहाँबाट अलप हुनुभयो, त्यहाँ भएका सबै दिव्यात्मा पनि अलप हुनुभयो। म अचम्ममा परिरहेको थिएँ। पितृगुरुदेव नजिकै आउनुभयो र हर्षित मुद्रामा रही मलाई धाप मार्दै भन्नुभयो– "तिमी वास्तवमा भाग्यमानी छौ, गुरु पाएका छौ। यस रहस्यको बोध हुनु थियो, भयो। अब तिमी देवलोकमा जाऊ।" त्यसपछि उहाँ पनि अलप हुनुभयो। म अब कसरी देवलोक जाने ? मलाई त्यहाँसम्म पुग्नको लागि एक मात्र सहारा गुरु नै हुनुहुन्थ्यो। घोर अचम्म त्यहाँ त .... क्रमशः

जय गुरुदेव !

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

गत भाद्र २ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिव गोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म संचालन भएको थियो ।

त्यस्तै, भाद्र ३ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । हवनमा सहभागी हुनेहरूले उक्त दिन कुकुरलाई खानेकुरा दिनुपर्ने र पिट्न नहुने नियम रहिआएको छ ।

त्यसैगरी, भाद्र ४ गते बुधबार बिहान ८-९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो । उक्त हवनमा सहभागीहरू हवन गरेको दिनमा रिसाउन भने पाइँदैन । गत भाद्र ५ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

## कृष्ण जन्माष्टमीमा श्रीकृष्ण पूजन

सिद्धाश्रम शक्ति केन्द्र नेपालले सामाजिक, सांस्कृतिक तथा धार्मिक उत्सव र चाडपर्वहरूलाई विशेष रूपमा मनाउने क्रममा गत भाद्र ७ गते श्रीकृष्ण जन्माष्टमी पूजा, भजन-कीर्तनका साथ मनायो । मध्यान्ह १२ बजेदेखि शुरु भएको उक्त कार्यक्रम अपरान्ह ४ बजेसम्म चलेको थियो ।

उक्त कार्यक्रममा पूजन गर्ने सौभाग्य प्राप्त गर्ने साधिकाहरू कमलादेवी अधिकारी, जयन्ती पुडासैनी र मधुमती रंजित हुनुहुन्थ्यो ।

## जनै पूर्णिमाको दिनमा कार्यक्रम

त्यस्तै, गत श्रावण ३२ गते शनिबार जनै पूर्णिमा अर्थात् रक्षा बन्धन पर्व सप्तर्षिहरूको पूजनपश्चात् साधकहरूले जनै (यज्ञोपवीत) धारण गरेर मनायो । कार्यक्रममा साधक साधिकालगायत अन्य उपस्थित महानुभावहरूले डोरो धारण गर्नुभएको थियो । जनै धारण गर्ने बेलामा गायत्री मन्त्र वाचन गरिएको थियो । कार्यक्रम बिहान ८ बजेदेखि ९ बजेसम्म संचालन भए पनि डोरो बाँड्ने कार्यक्रम भने दिनभरि रहेको थियो ।

## जग्गा हस्तान्तरण

कार्यकर्ता सहायक समूह ग को तालिम कार्यक्रममा साधक पूर्ण वनमाली र साधिका कृष्णदेवी वनमाली दम्पत्तिले साँगा गाविस वडा नं. ८ (क) मा रहेको चार आना जग्गा को लालपुर्जा सम्पर्क कार्यालय बनेपाका लागि हस्तान्तरण गर्नुभयो ।

गत भाद्र २० र २१ को तालिम कार्यक्रम बीचमा सावर मातृका सदस्यज्यूलाई उक्त जग्गाको लालपुर्जा हस्तान्तरण गरिएको थियो ।

## वार्षिकोत्सव सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्र, गोरखा बसपार्क सम्पर्क कार्यालयअन्तर्गत लक्ष्मीबजार आरती केन्द्रले गत श्रावण ३२ गते आफ्नो प्रथम वार्षिकोत्सवलाई विविध कार्यक्रमका साथ मनायो । भजन-कीर्तन, गुरु पूजन, आरती आदिका साथ सम्पन्न भएको सो कार्यक्रममा सम्पर्क कार्यालय बसपार्क, आरती केन्द्र दरबार मार्ग, नारेश्वर एवं दुम्श्रीका साधक साधिकाहरूको उपस्थिति थियो ।

## सम्पर्क कार्यालय गतिविधि

गत भाद्र २१ गते सम्पर्क कार्यालय भक्त पुरको आयोजनामा भक्तपुरको कटुन्जे गाविसस्थित सुशील भैरव मन्दिर तथा स्कूल प्राङ्गणमा विशेष परिचयात्मक कार्यक्रम सम्पन्न भयो । कार्यक्रममा भजन-कीर्तनका साथै आश्रमबाट सम्पन्न हुने विविध कार्यक्रमहरूको बारेमा जानकारी गराइएको थियो ।

स्थानीय समाजसेवी श्यामसुन्दर धौभडेलले यस्तो कार्यक्रम टोल-टोलमा सम्पन्न हुनुपर्ने र यसका लागि सिद्धाश्रम शक्ति केन्द्र अगाडि बढ्नुपर्ने धारणा राख्नुभएको थियो । कार्यक्रममा श्री धौभडेललाई उपहारस्वरूप गुरूफोटो प्रदान गरिएको थियो । दिउँसो १२:०० बजेदेखि मध्याह्न ४ बजेसम्म चलेको कार्यक्रममा सुशील भैरव मन्दिर परिसरभित्र परमपूज्य सद्गुरुदेवहरूको तस्वीर स्थापना गरिएको थियो । उक्त सम्पर्क कार्यालयले भाद्र २० गते मन्दिर परिसरको सरसफाइ कार्यक्रम पनि सम्पन्न गरेको थियो ।

## विद्याश्रम गतिविधि

गोरक्ष निखि ज्योति दिव्य विद्याश्रमले गत श्रावण २७ गते एक कार्यक्रमका बीच सम्पन्न गऱ्यो । कार्यक्रममा सावरपन्थी सदस्य नं. ३ र सावर मातृका नं. ४ ले संयुक्त रूपमा विद्याश्रममा नवगठित वशिष्ठ, विश्वामित्र, वाल्मीकि र वेदव्यासनामक विद्यार्थी समूह (हाउस) को झण्डोत्तोलन गर्नुभएको थियो ।

उक्त कार्यक्रममा हेड ब्वाई, हेड गर्ल, टिम लिडर, भाइस टिम लिडर, क्लास मनिटर, हाउस क्याप्टेनहरूको पनि चयन गरी सपथ ग्रहणका साथै व्याच वितरण पनि गरिएको थियो ।

# आश्रम गतिविधि

## दिव्य गुरु महोत्सव

गत भाद्र ५ गते बिहीबार (तदनुसार अगष्ट २१ तारीख, २००८) बसुन्धरामा रहेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा विभिन्न कार्यक्रमका बीच दिव्य गुरु महोत्सव सम्पन्न भयो । डा. नारायण दत्त श्रीमालीज्यूका रूपमा सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस धरतीमा अवतरित हुनुभएको पावन अवसरको स्मरणमा सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीख दिव्य गुरु महोत्सव मनाउँदै आइरहेको छ ।

स्तवन वन्दनासँगसँगै १०:१५ मा शुरु भएको उक्त दिव्य गुरु महोत्सवमा गुरु पादुकाको दिव्य पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन र नृत्य आदि कार्यक्रमहरू सम्पन्न भएका थिए । दिव्य गुरु महोत्सवमा पूजन गर्ने सौभाग्य साधिकाहरू विश्वराज लिम्बु, विष्णुकुमारी तुम्बाहाम्फे र राधादेवी श्रेष्ठले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलकी सदस्य कोपिला थापाको स्वागत-मन्तव्यबाट शुरु भएको थियो । कार्यक्रममा सावरपन्थी सदस्य नं. ३ तथा प्रचार प्रसार तथा संगठन विभाग संयोजक श्री शिशिर सापकोटाज्यूले २० जना पत्रिका सदस्य बनाएर पत्रिका सदस्यता विस्तारमा योगदान पुऱ्याउनु हुने साधकहरू माधव बुढाथोकी, शोभा बराल, हरिचन्द्र श्रेष्ठ र साधिका रमा श्रेष्ठलाई परमपूज्य सद्‌गुरुदेवहरूबाट प्राप्त विशेष धारण माला पुरस्कारस्वरूप वितरण गर्नुभयो ।

## कार्यकर्ता सहायक समूह ग र घ को तालिम

सिद्धाश्रम शक्ति केन्द्रले मासिकरूपमा सम्पन्न गर्दै आइरहेको तालिमअन्तर्गत गत भाद्र २० र २१ गते कार्यकर्ता सहायक समूह 'ग' र 'घ' को तालिम सम्पन्न भएको छ ।

समूह 'ग'को तालिम बिहान ६.३० बजे र समूह 'घ'को बिहान ११:३० बजे शुभारम्भ उक्त तालिम कार्यक्रममा दुवै समूहबाट काठमाडौँ, भक्तपुर, ललितपुर, काभ्रे, सिन्धुपाल्चोक, सिन्धुली, जनकपुर, सर्लाही, मोरङ, चितवन, सुनसरी, तनहुँ, लमजुङ, गोर्खा, स्याङजा, मकवानपुर, कास्की आदि सोह्र जिल्लाबाट सहभागिता रहेको थियो ।

कार्यक्रममा सम्पन्न गुरु पादुकाको दिव्य पादुकाको पूजन गर्ने सौभाग्य पाउनु हुनेहरूमा 'ग' समूहको पहिलो दिनको पूजनमा बनु श्रेष्ठ, टंक बानियाँ, गौरीदेवी ज्ञवाली र विष्णुकुमारी तुम्बाहाम्फे हुनुहुन्थ्यो भने दोस्रो दिनको पूजनमा जुनु महर्जन, जीवन कक्षपति, कुलबहादुर कार्की, विकास न्यौपाने, मोनी दवाडी र ईश्वरी खड्काले गुरु पूजन गर्ने सौभाग्य पाउनुभएको थियो ।

त्यस्तै, समूह 'घ' अन्तर्गत पहिलो दिनको पूजनमा अर्चना पंत, सुनम के.सी. र पवित्रा खरेलले गुरु पूजन गर्ने सौभाग्य पाउनुभएको थियो दोस्रो दिनको पूजनमा निशा ढकाल, रामकला कार्की, हरि कार्की र पद्मराज जोशीले उक्त सौभाग्य पाउनुभएको थियो ।

कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङअनुसार समूह 'ग' बाट 'ख' मा पदोन्नत हुने कार्यकर्ताहरूमा विष्णुकुमारी तुम्बाहाम्फे, कल्पना कुँवर, द्वारिका चालिसे, विजेन्द्र श्रेष्ठ, सुनिल बानियाँ, ईश्वरी खड्का, यदुनन्दन आचार्य, वसन्ती सिलवाल, सावित्री थापा, दीपा खड्का, मोनी दवाडी, लक्ष्मी पौडेल, दामोदर गौतम, सीता बास्तोला र शोभा तिमिल्सिना हुनुहुन्छ भने समूह 'घ' बाट पदोन्नति भई समूह 'ग' मा पुग्ने कार्यकर्ताहरूमा क्रमशः जयकृष्ण तिमिल्सिना, मनोज खड्का, रेखा क्षेत्री (२), कृष्ण के.सी., विमला जिम्बा, दीपक भण्डारी, अर्चना पन्त, सुमित्रा गौतम, गीता न्यौपाने, सुशीला पहाडी, विनीता सिग्देल, रेणुका न्यौपाने, गौमती थापा, हरिचन्द्र सिग्देल, रमेशकाजी श्रेष्ठ हुनुहुन्छ ।

## हरितालिका (तीज) एवं ऋषिपञ्चमी पूजन

हिन्दु नारीहरूको महान् पर्व तीजलाई गत भाद्र १७ गते सिद्धाश्रम शक्ति केन्द्रले भव्यरूपमा मनाएको छ । साथै १९ गते दिदी साधिकाहरूले ऋषिहरूको पूजन गरेर उहाँहरूप्रति श्रद्धापुष्प अर्पण गरेका थिए । कार्यक्रममा साधिकाहरूले सामुहिक रूपमा अरुन्धतीसहित सप्तर्षिहरूको पूजा सम्पन्न गरेका थिए ।

तीजकै क्रममा गत भाद्र १५ गते संस्थाले साधिका दिदी-बहिनीहरूलाई दर खुवाएको थियो ।

## रूसी भूमिमा पुनः साधना कार्यक्रम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्‌गुरुदेवहरूको महान् योजनालाई मूर्तरूप दिन देशभित्र मात्र नभई अन्तर्राष्ट्रियरूपमा पनि आफ्ना कार्यहरूलाई बिस्तारै अगाडि बढाउँदै आइरहेको छ । यसै क्रममा संस्थाको तर्फबाट सावर पन्थी नं. १ र २ ज्यूहरू रुसको भ्रमण सफलताका साथ सम्पन्न गरी गत भाद्र १५ गते नेपाल फर्कनुभयो । उहाँहरू गत श्रावण १७ गते रुस प्रस्थान गर्नुभएको थियो । यो सापद्वयको रुस भ्रमण तेस्रो हो ।

यसपालिको भ्रमणमा गुरुहरूको बारेमा जानकारी दिने कार्यक्रम, साधना, ध्यान एवं योगका कक्षाहरू संचालन भएका थिए । शान्तिको खोजी गर्दै अध्यात्म पथमा अग्रसर हुन चाहेका रुसी जनताहरूलाई कार्यक्रमहरूमा स्पष्ट मार्गनिर्देशन प्रदान गरिएको थियो । साथसाथै व्यावहारिक रूपमा विभिन्न कक्षाहरू पनि सम्पन्न गरिएका थिए । गुरुहरूप्रतिको श्रद्धाभक्ति बढाउनुका साथै जीवनमा गुरुलाई धारण गरी साधना, ध्यान गर्दा सफलता प्राप्त गर्न सकिने गूढ रहस्यलाई पनि उक्त अवसरहरूमा बुझाइएको थियो ।

जे होस्, अन्तर्राष्ट्रिय रूपमा पनि सिद्धाश्रम शक्ति केन्द्रलाई चिनाउँदै लैजाने क्रममा रुसी भूमिले यस्ता दिव्य कार्यक्रमहरू गर्ने सौभाग्य प्राप्त गर्दै आइरहेको छ ।

श्री श्री गुरुदेव अद्‌भुत साधक, तपोनिष्ठ, योगी एवं शक्तिको अतुलनीय भण्डार हुनुहुन्थ्यो । सूर्यविज्ञान एवं क्षणविज्ञानका उहाँ अद्वितीय मर्मज्ञ हुनुहुन्थ्यो ।

एकपटक धेरै समयसम्म गुरुसँग भेट हुन नसकेको कारण मनमा क्षोभ भइरहेको थियो, एक दुईपटक उहाँको स्मरण पनि गरेँ तर इन्द्रियातीत हुन सकेन, मेरो बेचैनी बढ्यो, न भोजन रुचिरहेको थियो, न कुराकानी । हरेक समय एउटै इच्छा, एउटै तृष्णा, एउटै विचार मनमा घुमिरहेको थियो– गुरुदेवको दर्शन होस्, यदि उहाँ आज्ञा दिनुहुन्छ भने सिद्धाश्रम फर्कौं । तर न त सपनामा नै दर्शन मिल्थ्यो, न त कुनै निश्चित आज्ञा नै–

बिस्तारै बिस्तारै एक दिन यस्तो स्थिति हुन गयो कि मलाई आफूमाथि नै घृणा हुन गयो । जब मसँग गुरुदेव भेट्न चाहनुहुन्न त फेरि यस शरीरको प्रयोजन नै के रह्यो र ? जीवित रहेर फाइदा नै के छ ?

हठात् यस्तो लाग्यो कि गुरुदेव उठेर मुस्कुराइरहनु भएको छ । उहाँले भन्नुभयो– के छ ? यति साह्रै हतार र व्यग्रता किन ? संयम राख्न सिक ।

त्यस दिन संयमको जुन प्रत्यक्ष पाठ पढाउनु भयो त्यो अमीट हुन गयो । मेरो त प्रयत्न यही रहन्थ्यो कि हरेक गुरु पूर्णिमाको दिन पूज्य गुरुदेवसँग भेटूँ । गुरुको कृपा नै यस्तो थियो कि यस दिन उहाँ सशरीर दर्शन दिनुहुन्छ । कैयौं वर्षदेखि यो क्रम रह्यो, प्रत्येक गुरु पूर्णिमाको दिन उहाँ कुनै विचार, प्रेरणा वा ज्ञान दिनुहुन्छ । तीमध्ये केही निम्न प्रकार छन्–

# परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा

–कार्य गर्दै रहू, केही न केही गर्दै रहू, आफ्नो इच्छाबाट जे पनि तिमीलाई प्राप्त उचित लाग्छ, त्यो गर वा जे म भन्छु त्यो गर, तर निरन्तर गर्दै रहू ।

–गुरु सेवा मनबाट त गर नै तर त्यसभन्दा श्रेयष्कर छ– शरीरबाट गर ।

**–कार्यं साधये व शरीरं पातये–**

अर्थात् साधनामा वा कार्यमा यस्तो दृढ संकल्प लिएर लाग कि या त शरीर नै नष्ट भई जाओस् या कार्य नै सफल होस् ।

**–यस्मात्रो द्विजते लोके लोकात्रो द्विजते च यः ।**

**हर्षामर्ष भयो द्वेगैर्मुक्तो यः स च मे प्रिय ॥**

–जीवनको सर्वश्रेष्ठ धर्म हो– सहन शक्ति ।

**–निवृत्त रागस्य गृहं तपोवनं ।**

यस्ता सयौँ उपोद्घात छन्, जुन समय समयमा मलाई प्राप्त भएका थिए र जुन मेरो जीवनका पाथेय बनेका थिए ।

आज म अकिंचन गुरु चरणमा दिन नै के सक्छु र ? यी सबै त उहाँकै कृपा हुन् । सूक्ष्म शरीरबाट त उहाँ स्वयं नै हुनुहुन्छ, म त केवल निमित्त मात्र हुँ ।

**'त्वदीयं वस्तु गोविन्दं तुभ्यमेव समर्पयेत् ।'**

*गुरु आज्ञालाई शिरोधार्य गरेर नारायण सिद्धाश्रमबाट आएर आफ्नो परिवारसँग जोधपुरमा रहन लाग्नुभयो । उहाँ शीघ्रातिशीघ्र आफ्ना गुरुदेवको आज्ञालाई पनि पूरा गर्न चाहनुहुन्थ्यो । अतः उहाँले ज्योतिषमाथि पुस्तकहरू लेख्न प्रारम्भ गर्नुभयो जसबाट सर्वप्रथम ज्योतिषज्ञान सर्वसुलभ हुन सक्यो । साथै निरन्तर गतिशील भएर विभिन्न ज्योतिष, सम्मोहन आदि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सम्मेलनहरूमा अध्यक्षता गरेर त्यसलाई कुनै निष्कर्षमा पुऱ्याउने कार्य, आगन्तुक, परिचितहरूका समस्याहरूलाई ज्योतिषअनुसार सम्झाएर तिनीहरूको निराकरण गर्नु रह्यो । उहाँको जुन कार्य अत्यन्तै गोपनीयरूपमा चलिरहेको थियो, त्यो थियो– पुस्तक रचनाको र उहाँ केही शिष्यहरूलाई साधनाको क्षेत्रमा अग्रसर गरिरहनु भएको थियो । यद्यपि उहाँको कठीन परीक्षामा उत्तीर्ण हुनु र उहाँको सहचर्य अत्यन्तै कठीन थियो । प्रतिदिन २० देखि २२ घण्टासम्म कार्य गर्नुहुँदै उहाँ गुरुको आज्ञालाई पूर्ण गर्नमा प्रयासरत हुनुभयो । समाज तथा निकटका व्यक्तिहरूले नै उहाँको सामु कठिनाइहरू र प्रतिकूलताको थुप्रो लगाइदिए तर स्वामी सच्चिदानन्दज्यूको शिष्यका लागि यी सबै स्थितिहरू महत्त्वहीन थियो, यी परिस्थितिप्रति उहाँले कहिल्यै विचार नै गर्नुभएन किनकि उहाँ नीलकण्ठ हुनुहुन्थ्यो, सारा विष पिएर पनि दिनभरि गृहस्थहरूलाई मार्गनिर्देशन दिँदै आफ्ना साधनापद्धति र रातमा आफ्ना संन्यासी शिष्यहरूलाई मार्गदर्शन गर्दै रहनुभयो साथै हिमालयका तान्त्रिकहरू, मान्त्रिकहरूसँग सम्पर्क र उनीहरूलाई मार्गदर्शन पनि दिइरहनु भयो ।*

*एकपटक भूर्भुआ बाबाको प्रयत्नबाट तान्त्रिक-मान्त्रिक र योगी आदिहरूको सम्मेलन भयो । यो दश दिनको सम्मेलन थियो जुन पाँच हजार वर्षमा पहिलोपटक यस्तो घटना भएको थियो । यसका लागि धेरै योगी आदिले यसमा प्रवेश गर्ने प्रयास गरेका थिए । तर प्रवेशका लागि तान्त्रिकहरूका लागि कमसेकम एउटा महाविद्या सिद्ध हुनु आवश्यक थियो । सम्मेलनको दिनमा मात्र तिनै तान्त्रिकहरूलाई प्रवेश गराइयो जोसँग अनुमति पत्र थियो । सम्मेलनका संयोजक स्वामी अभयानन्द चिन्तित थिए कि सबै भाग लिनेहरू अति विशिष्ट छन् । यदि कुनै अनर्थ भएमा के होला ! फेरि पनि सम्मेलनमा शिवका गणजस्तै ४०० तान्त्रिक-मान्त्रिक एकत्रित भए जसमध्ये बीसजना भैरवीहरू थिए ।*

*सम्मेलनमा सबै हर्षित थिए किनकि मां कृपालु भैरवी, देवुल भैरवी, आनंदा भैरव, पगला बाबा, देवहुर बाबा, कृपालु स्वामी, बाबा भैरवनाथ, विश्व स्वामी, त्रिजटा अघोरी, खर्परानन्द भारती, स्वामी गिरजानंद आदि पनि उपस्थित थिए ।*

*सम्मेलनको प्रारम्भमा भूर्भुआ बाबाले तान्त्रिकहरू, मान्त्रिकहरू, साधकहरू र योगीहरूसँग आह्वान गर्नुभयो कि उहाँहरूले जनसाधारणसँग आफूलाई सम्पर्कित गर्नुहोस् र आफ्नो ज्ञानलाई यसप्रकार समाजमा वितरित गर्नुहोस् कि सामान्य साधकले पनि लाभ उठाउन सकून्, साथै उहाँले अध्यक्षको चयनका लागि सबैलाई आमन्त्रित गर्नुभयो । उहाँले भन्नुभयो कि यस्तो सभापतिको चयन होस् जसको गति सबै प्रकारका विद्याहरूमा समान होस् र उहाँले स्पष्ट गर्नुभयो कि यहाँ 'वृद्धोऽपि न वृद्धः ज्ञान वृद्धोऽपि वृद्धः' ! अतः त्यसको देहगत आयु बाधक छैन । यसपछि उहाँ बस्नुभयो । लगत्तै कसैले सभापतिका लागि उहाँकै नाम अनुमोदन गरे जसको मान्त्रिकहरूले विरोध गरे र भूर्भुआ बाबा स्वयंले पनि यो पद स्वीकार्नुभएन । स्वामी कृपाचार्यले मां कृपालु भैरवीको नाम अघि सारे । यस विषयमा त्रिजटा अघोरीले भने– मां कृपालु केवल भैरवी भएको र यदि मेरो चुनौति स्वीकार्दछिन् भने म उनलाई अध्यक्ष मान्न तयार छु । तर मां भैरवीले चुनौति स्वीकार गरिनन् । केही साधकहरूले पगला बाबासँग निवेदन गरे तर उनले वाममार्गीको साधना नगरेको बताए । केही अन्य नामहरूमाथि पनि चर्चा चल्यो । प्रेत बाबाको नाम अनुमोदित गरिँदा धूर्जटा अघोरीले उनलाई चुनौति दिए कि यदि हठयोगी प्रेत बाबाले उनको संहारिणी कृत्याको प्रहार झेल्छन् भने उनी सभापति बन्न सक्छन् ।*

*यसप्रकार दिउँसोको १ बजेसम्म चल्दै रह्यो र अहंको टक्कर, साधनाको टक्कर भइरह्यो, कुनै निष्कर्ष निक्लिएन । यस्तो महसुस भयो कि सम्मेलन शायद नै सम्पन्न होला । मध्यान्हको विश्रामपछि करिब ४ बजे सायंकालीन बैठक प्रारम्भ भयो । भूर्भुआ बाबाले निवेदन गर्नुभयो कि अध्यक्षको चयन शीघ्र होस् जसबाट पछिका गतिविधिलाई प्रारम्भ गर्न सकियोस् । भुर्भूआले यति भनेर बस्न मात्र लाग्नुभएको थियो, कैयौँ व्यक्ति एकैसाथ उठे र कैयौँ नामको चर्चा भयो । होहल्ला यति धेरै भयो कि केही पनि सुन्न सकिरहेको थिएन । यस्तो बेला त्रिजटा अघोरीले उठेर जोरसँग हुंकार भरे जसबाट सभामा पूरा मौनता छायो । उनले भने कि यसप्रकार समय व्यर्थमा नष्ट भइरहेको छ, भूर्भुआ बाबाको यस कथनसँग म सहमत छु कि कुनै यस्तो सभापतिको चयन होस् जो सबै क्षेत्रमा निष्णात् होस् । म श्रीमालीको नाम सभापतिको रूपमा प्रस्तुत गरिरहेको छु, मेरो विचारमा उहाँलाई सभापतिको रूपमा सर्वसम्मतिद्वारा चयन गरियोस् ।* क्रमशः

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**चिन्मयं व्यापितं सर्वं**
**त्रैलोक्यं सचराचरम् ।**
**असित्वं दर्शितं येन**
**तस्मै श्री गुरवे नमः ॥११९॥**

भावार्थ : समस्त त्रिलोकमा चर, अचर एवं चैतन्य प्राणीहरूमा जो ब्रह्मरूपले व्याप्त छन्, 'तत्वमसि' वाक्यमा 'असि' पदको महत्त्वपूर्ण अर्थ देखाउने गुरुलाई म भक्तिभावले नमस्कार गर्दछु । यस वाक्यमा 'तत्' पदको अर्थ हो 'ब्रह्म', 'त्वं' पदको अर्थ हो जीव, 'असि' पदको अर्थ हो 'ऐक्य', यस प्रकारको आत्मबोध गराउने ज्ञान दिन गुरु मात्र समर्थ हुनुहुन्छ, तथा उहाँ नै शिष्यको जीवनमा आत्मबोध गराउने मार्गदर्शकका रूपमा लिन लायक वा उपादेय हुनुहुन्छ ।

**निर्गुणं निर्मलं शान्त**
**जंगमं स्थिरमेव च ।**
**व्याप्तं येन जगत्सर्वं**
**तस्मै श्री गुरवे नमः ॥१२०॥**

भावार्थ : गुरु जो निर्गुण अर्थात् तीनै गुणरहित, निर्मल अर्थात् पापरहित तथा शान्त, समस्त जंगम (स्थिर) र स्थावर (चल) पदार्थहरूमा र अन्य सांसारिक पदार्थहरूमा व्याप्त हुनुहुन्छ, यस्ता गुरुलाई म नमस्कार गर्दछु । गुरुको अर्थ हो– 'ज्ञान' । ज्ञान ब्रह्ममय हो र ज्ञान ब्रह्मको स्वरूप हो, लक्षण होइन । यस किसिमले गुरु निराकाररूपमा सर्वत्र व्याप्त हुनुहुन्छ । शिष्यका हृदयमा ब्रह्मस्वरूपमा स्थित गुरुले विशेष अवस्थामा निज स्वरूपको बोध उसलाई गराउनु हुन्छ ।

**येनेदं दर्शितं तत्वं**
**चित्त चैन्यादिकं तथा ।**
**जाग्रत् स्वप्न सुषुप्त्यादि**
**तस्मै श्री गुरवे नमः ॥१२१॥**

भावार्थ : परमात्म तत्त्वको बोध प्रदान गर्ने, तत्वमसिको लक्ष्यलाई शिष्यका हृदयमा समाहित गरेर उसलाई चैतन्यता प्रदान गर्ने, अन्तहीन वृत्तिहरूका विषयहरू, जाग्रत, स्वप्न, सुषुप्ति आदि अवस्थाहरूको दशा विशेषको ज्ञान गराउने ती परम कारुणिक गुरुलाई हृदयदेखि नमस्कार छ । गुरु शिष्यको कल्याणका लागि सतत् प्रयासरत देखिनुहुन्छ । तसर्थ, शिष्यले सदैव गुरूप्रति कृतज्ञ हुनुपर्छ किनकि उहाँको कृपाले नै शिष्यको जीवन सौभाग्यशाली बन्दछ ।

**शोषणं भवसिन्धोश्च**
**दीपनं क्षरसंपदाम् ।**
**गुरोः पादोदकं यस्य**
**तस्मै श्री गुरवे नमः ॥१२२॥**

भावार्थ : गुरुको चरणोदकले संसार सागरलाई सुकाउन विनाशशील सांसारिक रहस्यलाई बताउँछ, यस्तो गुरुत्वलाई म अत्यन्त भावविह्वलताका साथ नमस्कार गर्दछु । गुरु चरणोदक जल मात्र होइन, गुरुको तपस्यांशले गोडाको औंलाको माध्यमबाट उसमा समाहित भएर शिष्यको कल्याण गर्दछ, तसर्थ, शिष्यले यसको सेवन अवश्य गर्नुपर्दछ । गुरु चरणोदकको सेवनले मात्र समस्त पुण्य प्राप्त हुन्छन् ।

जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

॥९९॥

**काहं ? क्व यामि ? कदना ? सुकृतैः प्रणष्टा,**
**लक्ष्यं किमस्ति ? तदहं न च वेद्मि किञ्चित् ।**
**एकं शरण्यगुरुमेव तदाश्रयन्ती;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

यस संसारमा कुन्नि कहिलेदेखि अल्मलिरहेको छु ? हे गुरुदेव ! मेरो मन भ्रममा परेर किंकर्तव्यविमूढ भइरहेको छ। यस सृष्टिको गति विचित्र छ, जटिल छ र तीव्र तमोगुणी अज्ञानका कारण आफ्नो मार्ग पहिल्याउन असमर्थ छु। म को हुँ ? पुण्यहीन म... 'म' कहाँ जाऊँ ? मेरो जीवनको लक्ष के हो ? मलाई यो सबै केही पनि थाहा छैन । मैले सुनेको छु कि उपरोक्त सम्पूर्ण प्रश्नहरूको उत्तर दिएर सारा समस्याहरूको समाधान सद्गुरुले मात्र गर्न सक्नुहुन्छ । आज त मेरो मन मुजुरजस्तै नाच्न थालेको छ किनभने मेरा दुर्भाग्यपूर्ण कर्मदोषका बीचमा आशाको किरण फैलाउनका लागि भगवान्ले मलाई गुरुवरसँग भेट गराइदिनु भएको छ। मेरा एक मात्र शरणदाता गुरुदेव नै हुनुहुन्छ। तसर्थ, उहाँकै आश्रय ग्रहण गर्दै हे निखिलेश्वर ! म हजूरको चरणकमलमा सतत् वन्दना गर्दछु ।

॥१००॥

**हस्तौ प्रसार्य गुरुदेव ! चिरावलम्बं,**
**दत्त्वा प्रतीक्षणविरामकृतार्थभावैः**
**संप्लावयन् मम मतिं कुरु भक्तिभव्यां;**
**वन्दे गुरो ! निखिल ! ते चरणारविन्दम् ॥**

हे गुरुदेव ! धेरै समयदेखि दुर्भाग्य काट्दै बडो मुश्किलले पूर्ण सामर्थ्यवान् सद्गुरु पाएको छु, मलाई डर लाग्छ कतै मायाको प्रबल कर्मदोषले पुन: आध्यात्मिक प्रगतिको मार्गबाट विमुख पार्ने त होइन अथवा हजूर स्वयं नै मबाट अलग्गिनु हुने त होइन । यसप्रकार विभिन्न शंकाहरू मलाई बारम्बार निराशातर्फ ठेल्ने प्रयास गर्दछन् । हे प्रभु ! हे गुरुदेव ! मेरा मनका यस्ता आशंकाहरूलाई निर्मूल गरिदिनुहोस्, दुवै हातले समातेर मलाई चिरस्थायी सहारा दिनुहोस्, चिरप्रतीक्षालाई समाप्त गरिदिनुहोस्, मलाई कृतार्थ गर्दै मेरो बुद्धिमा आफ्नो पराभक्तिपूर्ण भव्य भावनाले परिपूर्ण गरिदिनुहोस्; म यसै प्रार्थनाका साथ हे गुरुवर ! निखिलेश्वर ! हजूरको चरणकमलको वन्दना गर्दछु ।

जय गुरुदेव !

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ। हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन्।*

### मन्त्र ग्रहणकर्ता

मन्त्र ग्रहणकर्ता भन्नाले मन्त्र साधना गर्ने व्यक्तिलाई बुझिन्छ। जसले मन्त्र प्राप्त गरी मन्त्र साधना गर्दछ, उसैलाई मन्त्र ग्रहणकर्ता भनिन्छ। मन्त्र ग्रहणकर्ता पनि आफैमा दिव्यतम व्यक्ति हुने कुरामा कुनै शंका रहँदैन। मन्त्र ग्रहण गर्नु भनेको भविष्यमा उक्त मन्त्र सिद्ध गर्न सक्ने क्षमता राख्नु हो। त्यसैले यस्ता दिव्य मन्त्रहरू जसले पायो उसले ग्रहण गर्न सक्दैनन्। मन्त्र ग्रहण गर्नको लागि पनि पात्रताको आवश्यकता पर्दछ। पात्रताबिना साधना सफल हुन सक्दैन। मन्त्र ग्रहणकर्तामा पनि

योग्यता हुनु आवश्यक छ ।

मन्त्र ग्रहणकर्तामा हुनपर्ने गुणहरूमध्ये सबैभन्दा ठूलो कुरा विश्वास हो । मन्त्रमाथि विश्वास नहुनेहरू, मन्त्र साधनाको महिमा नबुझ्नेहरूले मन्त्र साधनाबाट सफलता प्राप्त गर्न गाह्रो हुन्छ । मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले आफूमा पूर्ण विश्वासका साथ उत्साह, उमङ्ग, जोश, जाँगरका साथ अगाडि बढ्नुपर्दछ । मन्त्र ग्रहणकर्ता अविश्वासी हुनु हुँदैन, कुतर्क गर्नेखालको हुनु हुँदैन, अहंकारी, घमण्डी, जिद्दी हुनु हुँदैन । आज्ञाकारी, धैर्य गर्न सक्ने, संयम गर्न सक्ने खालको हुनुपर्दछ । उसले आफूलाई प्राप्त आदेश निर्देशनलाई पालना गर्नुपर्दछ । प्रत्येक कुरालाई होशियारीपूर्वक लिने गर्नुपर्दछ । आफूलाई प्राप्त मन्त्रलाई पूर्णरूपले श्रद्धा, भक्तिभावका साथ ग्रहण गर्न सक्ने खालको हुनुपर्दछ । जति भावले ग्रहण गर्न सक्यो त्यति नै बढी सफलताका सम्भावनाहरू हुने गर्दछन् । त्यसैले ग्रहणकर्ताले जहिले पनि दिल खोलेर पूर्णताका साथ लिनुपर्दछ । ग्रहण गर्ने नै भएपछि कुनै सन्देह, भ्रम, तर्क, वितर्क राख्नु हुँदैन । बरु पहिल्यै कुरा बुझ्ने, आफूलाई पूर्ण विश्वस्त पार्ने गर्नुपर्दछ । कुनै पनि सन्देह नराखी पूर्ण निष्ठा भावले अगाडि बढ्नाले नै व्यक्तिले पूर्ण सफलता हासिल गर्न सक्दछ ।

सानोतिनो कुरामा नै विचलित हुने, अरुले केही भन्दैमा हतोत्साहित हुने, अधैर्य एवं विचलित मानसिकताका व्यक्तिहरूलाई मन्त्र साधनामा अगाडि बढ्न गाह्रो हुन्छ । मन्त्र ग्रहण गरिसकेपछि मन्त्रमा शंका गर्ने, अविश्वास गर्ने, मन्त्रको नियमलाई अनादर गर्ने, मन्त्रलाई हल्कारूपमा लिने आदि गर्नु हुँदैन । यस्तो विकृत मानसिकता मन्त्र ग्रहणकर्ताको हुन हुँदैन । जसरी पनि प्राप्त गर्छु, जस्तोसुकै कठोर दुःख, पीडा, संघर्ष गर्न पनि पछि हट्दिन भन्ने भाव हुनुपर्दछ । कि प्राप्ति होस्, कि म नै नरहुँ भन्ने भावले गर्न सक्यौं भने अवश्य सफलता प्राप्त हुन्छ । त्यसैले मन्त्र ग्रहणकर्ताको रूपमा आफूलाई सबल र सक्षम पात्रको रूपमा स्थापित गरौं, मन्त्र साधनामा सफलता प्राप्त गरौं ।

जय गुरुदेव !

# तान्त्रिक पर्व: दसैं

विजयादशमी २०६५ फेरि हाम्रो नजिक आइपुगेको छ। माता दुर्गा भवानीको आशीर्वाद, कृपा, अनुकम्पा प्राप्त गरी जीवनलाई साधनामय बनाई यही जीवनलाई नै अन्तिम जीवन बनाउन अर्थात् मोक्ष प्राप्तिको दिशातर्फ अग्रसर गराउनको लागि हाम्रो घर, आँगनमा दसैं आइपुगेको छ। दसैं कसैलाई दशा बनिरहेको छ, कसैलाई मोजमज्जा गर्ने भौतिक रमाइलोमा बिताउने माध्यम बनिरहेको छ। जसले जसरी जुन रुपमा लिए पनि दसैं आफैमा एउटा यस्तो पर्व हो जसले हामी सबै नेपालीहरुलाई एकताको सूत्रमा बाँध्दछ। हामी सबैलाई दुर्गा भवानीको आशीर्वाद, कृपा, अनुकम्पा प्राप्त गर्नका लागि लालायित बनाउँछ, माताको कृपा आशीर्वादले गर्दा एउटा छुट्टै जोश, जाँगर, उत्साह, उमंग लिएर आउने गर्दछ।

देशमा घटेका विविध घटनाहरु र विविध प्रकारका उतार-चढावहरुले कतिपय नेपालीको घरमा दसैं दसैं बनेर आउन सकेन, बाढी पीडितहरुका लागि दसैं दशा नै बनेको छ। बढ्दो महंगीको मारमा पिल्सिरहेका नेपाली जनताका लागि पनि शायद दसैं दशा बनेको छ। तर पनि दसैं दसैं नै हो यसमा दसैंको कुनै दोष छैन। मानवीय दोषलाई, मानवीय कार्यहरुमा भएका कमी-कमजोरीहरुलाई अथवा भनौं नेतृत्व गरेर हिंड्ने नेतृत्वकर्ताहरुको कमी-कमजोरीले गदा दसैंलाई दोष दिनु राम्रो पक्कै पनि होइन।

दसैं एउटा संस्कृति हो, एउटा पर्व हो र आफैमा एउटा उल्लास र आनन्द लिएर आउने माध्यम पनि हो र हामीलाई विश्वमा नेपाली भनेर चिनाउने एउटा छुट्टै पहिचान पनि हो। त्यसैले यस्तो पर्वलाई दशासँग गाँस्नु आफैमा उपयुक्त हुँदैन। हुने-नहुने, धनी र गरीबबीचको विभेदले गर्दा पनि यस्तो शब्द प्रयोग भएको हुनसक्छ तर वास्तवमा दसैं खान, लाउनका लागि भन्दा पनि मातालाई खुशी बनाएर साधनात्मक उच्चता प्राप्तिका लागि प्राप्त भएको विशेष पर्व हो। यस कुरालाई नबुझेको कारणले गर्दा केवल मीठो खानु र राम्रो लाउनुमा नै दसैंलाई सीमित राखेको कारण दसैं आज दशा बनिरहेको छ। त्यसैले दसैंलाई दशा होइन, यसलाई सौभाग्यको रुपमा मनाउनका लागि हामी सबे मिलेर यसपालिको दसैंलाई मातामय बनाउने प्रयास गरौं, माता दुर्गा भवानीको भक्ति, उहाँको आराधना, उहाँको साधना, उहाँको चिन्तन र उहाँप्रति नै समर्पित भएर प्रार्थना गरौं- लोककल्याणका लागि मातासँग आशीर्वाद मागौं देशको भलो होस्, यस देशमा अब कहिल्यै रक्तपात नहोस्, यस देशमा अब कहिल्यै अशान्ति नहोस्, सदैव माताको कृपादृष्टि सम्पूर्ण नेपालीहरु उपर रहिरहोस्। प्रार्थनामा ठूलो शक्ति हुन्छ, शक्तिका लागि भक्ति चाहिन्छ, भक्ति रसले भरिएको प्रार्थना माता र सद्गुरुदेवहरुले अवश्य सुन्नुहुन्छ। तसर्थ दसैं मनाउनका लागि हामीसँग पर्याप्त स्रोत, साधन अथवा भनौं धनसम्पत्ति आदि होला नहोला, हुनेले राम्रोसँग मनाउनु होला, नहुनेले जसोतसो गरेर मनाउनु होला, तर जसरी मनाए पनि माताको भक्तिमा चाहिं फरक हुने छैन किनभने भक्ति गर्नका लागि न त धन चाहिन्छ, न त सम्पत्ति चाहिन्छ, न त राम्रो लुगा लगाउनेले गरेको भक्ति बढी हुने हो, न त नराम्रो लुगा लगाउनेले गरेको भक्ति कम हुने हो।

यो शक्ति पर्व हो। तन्त्रमा आधारित पर्व हो। हाम्रो समाज तन्त्रदेखि भागिरहेको छ। तर त्यही समाजमा एउटा यस्तो पर्व छ जुन सबैका लागि उत्तिकै प्रिय छ, सर्वमान्य छ। सर्वदा उत्साह, उमंग, जोश र जाँगर भर्ने पर्वको रुपमा रहेको छ। पर्वचाहिं मनाउँछौं तर तन्त्रसँग डराउँछौं। त्यही तान्त्रिक विधि-विधानपूर्वक स्थापित पर्वलाई सबैले हृदयंगम गरेर आत्मसात् गर्छौं, तर त्यही तन्त्रसँग भागिरहेका छौं। यो कस्तो विरोधाभासपूर्ण परिस्थिति हाम्रो समाजमा रहेको छ। यो केवल बुझाइको कमी हो भन्ने हामीलाई लाग्दछ। त्यसैले हाम्रा पूर्वजहरुले तान्त्रिक विधि-विधानबाट मात्रै मातालाई खुशी पार्न सकिन्छ, माताको कृपा, आशीर्वाद प्राप्त गर्नका लागि तन्त्र नै एउटा यस्तो माध्यम हो भन्ने कुरा बुझेर समाजमा पनि यस्तो परम्परा स्थापित गरिदिनुभएको हो। यसलाई आजसम्म तपाईं हामीले तान्त्रिक विधि-विधानमा पनि पूजाआजा गर्दै आइरहेका छौं। तर फेरि विडम्बनाको कुरो, त्यही तन्त्र भनेपछि हामी भाग्दछौं। अब यस्तो नहोस् भन्ने हाम्रो चाहना हो। तन्त्रको प्रयोगबाट समाजलाई सुव्यवस्थित बनाउन सकिन्छ। तन्त्रको प्रयोगबाट आफैले आफैलाई सुव्यवस्थित बनाउन सकिन्छ। तन्त्रको प्रयोगबाट सारा देशलाई, सारा विश्वलाई र सारा ब्रह्माण्डलाई व्यवस्थित बनाउन सकिन्छ। तन्त्र आफैमा एउटा सुव्यवस्थाको नाम हो। तन्त्र आफैमा एउटा यस्तो प्रणाली हो जुन प्रणालीले मात्रै सारा संसारलाई व्यवस्थित राख्न सक्दछ। प्रणालीसँग डराउनुपर्ने, प्रणालीसँग भाग्नुपर्ने कुनै आवश्यकता छैन। त्यसैले आउनुहोस्, यस वर्षको बडादसैंको पावन अवसरमा एकपटक फेरि हामी सबै मिलेर मातासँग प्रार्थना गरौं, सद्गुरुदेवहरुसँग प्रार्थना गरौं- हे गुरुदेव, हे माता! हामीलाई आशीर्वाद दिनुहोस्, कृपा, अनुकम्पा प्रदान गरिदिनुहोस्, यो देशको कल्याण गरिदिनुहोस् र समस्त देशवासीको कल्याण गरिदिनुहोस्। अस्तु।